# नेपालसंवत्‌को राष्ट्रिय मान्यताको अनौचित्य

नयराज पन्त

वि. सं. २०३९ वैशाखसङ्क्रान्ति

प्रकाशक
संशोधन-मण्डल
१०/२७४ घट्ट सवलबहाल
काठमाडौँ नेपाल

मोल- रु. ५।

मुद्रक
लुष प्रेस
बानेश्वर नेपाल

# भन्न बाँकी कुरा

भूमिका धेरै बाँधिरहनुपर्ने जरूरत छैन। जे भन्नुपर्ने कुरा लेखमै परिसकेको छ।

यो सानो पुस्तक विक्रमसंवत्को राष्ट्रिय मान्यता खारेज गरी नेपालसंवत्लाई राष्ट्रिय मान्यता दिनुपर्छ भन्ने मागको अनौचित्यलाई लिएर वि. सं. २०३८ कार्तिक १९ गतेदेखि चैत २५ गतेसम्म पत्रपत्रिकामा छापिएका मेरा लेखको सङ्ग्रह हो।

दुइवटा सप्ताहिक पत्रिकामा पाँच महीनाभित्र पटक पटक गरी छापिएका ती लेखलाई नै यस विषयमा मेरो विचार बुझ्न खोज्ने सबैलाई सजिलो होस् भनी यो सानो पुस्तकको रूप दिइएको छ।

महेशराज पन्त
वि. सं. २०३९ वैशाखसङ्क्रान्ति

# प्रश्नोत्तर

[नेपालसंवत्बारे श्रीरघु घिमिरेका प्रश्नको जवाफ]

प्रश्न नं. १- नेपाली भनिएको नेपालसंवत्लाई राष्ट्रिय संवत्को रूपमा नै मान्नु उचित होइन र ? किनभने नामकै दृष्टिले हेर्दा पनि विक्रमसंवत्मा भन्दा नेपालसंवत्मा राष्ट्रियता झल्कँदैन र ?

प्रश्न नं. २-नेपालमा राष्ट्रिय रूपमा मानिँदै आएको विक्रम-संवत् विदेशी होइन र ?

प्रश्न नं. ३-हाल केही वर्षदेखि नेपालसंवत् नै राष्ट्रिय संवत हो भन्दै विशेष रूपमा समारोहहरू गरिन थालेकोलाई तपाईँ कस्तो ठान्नु हुन्छ ?

प्रश्न नं. ४- नेपालका संवत्का बारेमा तपाईँका केही सुझाव ?

उत्तर- यहाँले मसँग गर्नुभएका चारवटै प्रश्नको उत्तर भिन्ना-भिन्नै दिनुसट्टा तिनको एउटै,तर केही लामो उत्तर दिएको खण्डमा विषय बढी स्पष्ट हुने हुनाले मलाई त्यसै गर्ने अनुमति दिनुहोस ।

संवत्को नाउँ नेपालसंवत् भएकोले र नेपालका एकथरी अल्पसङ्ख्यक भाषाभाषीहरूमा यस संवत्को चलनचलती भएकोले नेपालसंवत् पक्कै पनि अराष्ट्रिय संवत् होइन, राष्ट्रिय संवत् हो। यसो भए तापनि संवत्का नाउँमा नेपाल शब्द हुँदैमा त्यस संवत्ले राष्ट्रिय मान्यता पाउनुपर्छ र एकथरी अल्पसङ्ख्यक र एकै ठाउँमा गुचमुचिएर रहेका भाषाभाषीहरूको स्वत्व कायम राख्न बहुसङ्ख्यक नेपालीहरूले परम्परादेखि चलेर आएको, नेपाली जनजीवनमा भिजेको विक्रमसंवत् छोडेर नेपालसंवत् चलनचलतीमा ल्याउन कति पनि आवश्यक छैन ।

फेरि भारतमा पनि चलेको छ भन्दैमा विक्रमसंवत् कसरी अराष्ट्रिय भयो, यो पनि आश्चर्यलाग्दो छ । आज ईसवी संवत् सारा यूरोप र अमेरिकाको साझा संवत् छ । तर जसको नाउँमा यो संवत् चल्यो, न ती यूरोपका थिए, न अमेरिकाकै थिए भन्ने कुरा यहाँलाई थाहै छ । संस्कृति भनेको राजनीतिको सीमासँगै नारिएको हुँदैन । राजनीतिको सीमा कालअनुसार सङ्कुचित वा विस्तृत हुन सक्छ । सनातनधर्मावलम्बीहरूको धर्मभाषा संस्कृतका श्रेष्ठतम वैयाकरण पाणिनि आजभोलिको राजनीतिको सीमाअनुसार पाकिस्तानी बनेका छन्, भोलि उनी कुन देशका हुनेछन् भन्न सकिँदैन । कुनै पनि ठूलो संस्कृतिको सीमा राजनीतिको सीमाभन्दा निकै ठूलो हुन्छ । फेरि एउटै संस्कृति मात्रै एकभन्दा बढी देश नहुने होइनन् । यस सन्दर्भमा समान संस्कृतिले भारत र नेपाल मात्र होइन, संसारका कैयन् देश बाँधिएका छन् भन्ने कुरा हामीले सम्झनुपर्छ । पक्कै पनि चारै वेद नेपालको वर्तमान सिमानाभित्र बनेका होइनन् । वेद नेपालमा बनेको होइन भनेर भोलिदेखि हामीले वैदिकमन्त्रोच्चारण गर्न छाड्ने हो भने, हुन्छ, विक्रमसंवत् पनि छोडौँ । विक्रमसंवत्लाई हामीले विदेशी संवत् भनी पन्छाउने हो भने हामीले विक्रमसंवत्को साथसाथै सनातन धर्मका र बौद्ध मतका ग्रन्थलाई एकएक गरी पन्छाउनुपर्छ विदेशी धर्मग्रन्थ भन्दै ।

नेपालखाल्डोमा र यसका वरपरका इलाकामा नेवार राजाहरूले राज्य गर्दा यतातिर नेपालसंवत् पक्कै पनि चलेको थियो तापनि यतातिर पनि विक्रमसंवत नौलो भने थिएन । विक्रमसंवत् पहिलेदेखि गोरखालगायत नेपालका सम्पूर्ण पहाडिया राज्यहरूमा चलेको थियो, तर नेपालसंवत् भने त्यतातिर कहिल्यै चलेको थिएन । जसरी नेपाली भाषाले पृथ्वीनारायण शाहको विजयभन्दा धेरै अगाडि बृहत्तर नेपालको साझा भाषाको रूप लिएको थियो, त्यसै गरी विक्रमसंवत् पनि पहिल्यैदेखि नेपाली जनजीवनमा भिजेको थियो भन्ने कुराका निकै प्रमाण जुटाउन सकिन्छन् ।

आज हामीले विक्रमसंवत्को ठाउँमा नेपालसंवत्लाई राष्ट्रिय स्तरको मान्यता दियौँ भने भोलि तराईका हाम्रा बन्धुहरूले नेपालसंवत्को ठाउँमा लक्ष्मणसंवत् आदि स्थानीय संवत्को राष्ट्रिय स्तरको मान्यताको लागि प्रश्न उठाउँदैनन् र पर्सि भोटमूलका हाम्रा बन्धुहरूले भोटको संवत्को राष्ट्रिय स्तरको मान्यताको माग गर्दैनन् भनी भन्न सकिँदैन । ती दुवै थरीको जनसंख्या नेवार बन्धुहरूको भन्दा निकै बढी छ र तिनीहरूले ओगटेको क्षेत्रफल नेवारहरूले ओगटेको क्षेत्रफलभन्दा निकै नै बढी छ भन्ने कुरा पनि यहाँनेर हामीले

विर्सन हुँदैन । यताबाट वर्ग वर्गमा झगडा बढ्न जान्छ र राष्ट्रिय एकतामा क्रमशः खलल पर्न जान्छ ।

कुनै पनि वर्गले अर्को वर्गको हितलाई असर नपारी आफ्नो कुराको प्रचार गर्ने कामलाई हामी नराम्रो भन्न सक्दैनौं । प्रजातन्त्र भनेकै अभिव्यक्तिको स्वतन्त्रता हो । भोटमूलका हाम्रा बन्धुहरूले ल्होसार मनाए जस्तै हाम्रा नेवार बन्धुहरूले पनि आफ्नो संवत्को नयाँ वर्ष मनाउनु राम्रो कुरा हो । तर नेपालसंवत्को प्रचार गर्दा विक्रमसंवत्लाई अराष्ट्रिय भनेर लान्छना लाउनुचाहिँ पक्कै पनि राम्रो कुरा होइन । त्यस्तै विक्रमसंवतको ठाउँ नेपालसंवत्ले पाउनुपर्छ भनी माग गर्नु चाहिँ पक्कै पनि दुस्साहससिवाय अरू केही होइन ।

[वि. सं. २०३८ कार्तिक १९ गतेको मानस]



# विक्रमसंवत्को विरोध किन ?

आफ्नो समुदायमा चलेको नेपालसंवत्को नववर्षारम्भ एक थरी अल्पसङ्ख्यकहरूले केही वर्ष यतादेखि धूमधामसँग मान्दै आइरहेकोमा एक जना ऐतिहासिकको नाताले मलाई केही भन्नु छैन । तर परम्परादेखि चल्दै आएको, नेपाली जनजीवनमा भिजेको विक्रमसंवत्लाई अराष्ट्रिय संवत् भनी लान्छना लगाएकोमा र विक्रमसंवत्को ठाउँ नेपालसंवत्ले पाउनुपर्छ भन्ने दुस्साहसमय माग गरेकोमा चाहिँ एकजना ऐतिहासिकको हैसियतले सर्वसाधारण जनताको अगाडि आफ्नो विचार प्रकट गर्नु मैले ज्यादै जरूरी सम्झेँ । त्यसैअनुसार यही कार्तिक १९ गतेको मानसमा नेपालसंवत् नेवारसमुदायमा मात्र चलेको संवत् हो; विक्रमसंवत् भने नेपालमा जताततै चलेको व्यापक संवत् हो; विक्रमसंवत्लाई विदेशी भनी छोड्ने हो भने यसको साथसाथै सनातन धर्मका र बौद्ध धर्मका ग्रन्थहरूलाई पनि हामीले एक एक गरी छोड्नुपर्छ; कुनै पनि ठूलो संस्कृतिको सीमा राजनीतिको सीमाभन्दा ठूलो हुने हुनाले विक्रमसंवत्लाई विदेशी संवत् भनी पन्छाउन सकिन्न भन्ने आशयको मेरो लेख छापियो । हुनत विक्रमसंवत्को ठाउँ नेपालसंवत्ले

पाइनुपर्छ भन्ने वस्तुस्थितिभन्दा परको माग गर्ने, राष्ट्रिय अखण्डताका विरोधी सम्प्रदायवादीहरूको लेखेर विरोध गर्ने म मात्र थिइनँ; राष्ट्रिय अखण्डताको कामना गर्ने अरू बुद्धिजीवीहरू पनि हुनुहुन्थ्यो । तर कुनै पूर्वाग्रह नराखी शुद्ध इतिहासको मननको आधारमा मैले प्रकट गरेको विचारले सम्प्रदायवादीहरूलाई निकै छोएछ । यसैले उनीहरूले निकै तल्लो तहमा ओर्लेर सभामा मलाई निकै गालीगलौज पनि गरेछन्; पत्रिकामा परोक्ष तवरले मेरो लेखको विरोधमा तथ्य कुरा हालेर होइन, विरोधको लागि विरोध गरेर लेख पनि छपाए । सभामा मलाई तथानाम गाली गरेर सम्प्रदायगत विद्वेषको नारा बुलन्द गर्नेहरूले वकितम्मा त्यसो गरे पनि लिखितम्मा चाहिँ त्यही सभाको खबर दिँदा मेरो नाउँसम्म लिने आँट गर्न सकेनन् ।

जतिसुकै मस्तसँग निदाएको मानिसलाई पनि कुनै तरहले ब्यूँझाउन सकिन्छ; निदाउन भने ननिदाएको, निदाएको भान पारी आँखा चिम्लेर बसेको मान्छेलाई भने कसै गरे पनि ब्यूँझाउन सकिन्न भन्ने मलाई थाहा भएकोले इतिहासका अनेकन् प्रमाणले सिद्ध भइसकेको नेपालको विशालतालाई बिर्सी नेपाल भनेको नेपालखाल्डो मात्र हो, त्यसभन्दा बाहिर नेपाल होइन भनी नेपालको राष्ट्रिय अखण्डताको विरोध गर्ने, एकै ठाउँमा गुचमुचिएर बसेका एकथरी अल्पसंख्यकहरूको भाषालाई नेपालभाषा भन्ने व्यापक नाउँ दिनुपर्छ भनी चिच्याउने सम्प्रदायवादीहरूले मेरो लेख पढ्नासाथ मैले दिएको तथ्यको आधारमा भोलिदेखि विक्रमसंवत्‌को विरोध गर्न छोडछन् भनी मैले आफ्नो विचार प्रकट गरेको



थिइनँ । मैले त खालि सम्प्रदायवादीहरूको वाग्जालबाट सर्वसाधारण जनता नबहकियून् भनेर मात्र आफ्नो विचार प्रकट गरेको थिएँ ।

पहिल्यैदेखि नेपाली जनजीवनमा भिजेको विक्रमसंवत् चन्द्रशमशेरको एक आज्ञाको भरमा चल्यो भन्ने झूठो प्रचार गरी राजाविरोधीहरूको सहानुभूति आफ्नो मततर्फ तान्ने चलाखी पनि यी सम्प्रदायवादीहरू गर्दैछन् । चन्द्रशमशेर श्री ३ महाराज हुनुभन्दा झण्डै साँढे पाँच सय वर्षअगाडिदेखि नेपालको विभिन्न भागमा विक्रमसंवत्‌को चलनचलती भएको प्रमाण जुटाउन सकिन्छ । कर्नालीप्रदेशका राजा पृथ्वी मल्लको लेखमा, नेपालखाल्डो र वरपरका इलाकामा राज्य गर्ने नेवार राजा स्थिति मल्लको पालाको लेखमा, उनका छोरा धर्म मल्लको पालाको लेखमा, पाल्पा, तनहुँ, मकवानपुर, चौदण्डी, विजयपुर राज्यहरूमा राज्य गर्ने सेन राजाहरूका लेखमा, गोरखाका राजा रामशाहदेखिका लेखमा, भक्तपुरका नेवार राजाहरूका लेखमा, काठमाडौँका पछिल्ला नेवार राजा जयप्रकाश मल्लले गोरखाका राजा पृथ्वीनारायण शाहलाई लेखिदिएको धर्मपत्रमा, प्यूठानका राजाको लेखमा, पृथ्वीनारायण शाहदेखिका सबै शाह राजाहरूका लेखमा विक्रमसंवत्‌को प्रयोग भएको छ । चन्द्रशमशेर श्री ३ महाराज हुनुभन्दा झण्डै सय वर्ष अगाडि वि. सं. १८६२ मा भएको बिर्ताहरण बासट्ठीहरण, चन्द्रशमशेरका ठाहिँला बाबु श्री ३ महाराज भइरहँदा वि. सं. १९३८मा भएको पर्व ३८ साल पर्व, चन्द्रशमशेरका ठाहिँला बाबुलाई वि. सं. १९४२ मा मार्दा भएको पर्व ४२ साल पर्व भनी कहलाएकोले विक्रमसंवत् जनजिब्रोमा पनि चन्द्रशमशेरभन्दा अगाडिदेखि नै भिजिसकेको थियो भन्ने कुरामा कुनै शङ्का छैन ।

नेपालसंवत् नेवार राजाहरूका राज्यमा बाहेक अन्त कताकता चलेको थियो ? यसको प्रमाण नेपालसंवत्का पक्षपातीहरूले देखाउनुपरेको छ । चीनका बादशाहले नेवार शासकलाई लेखेको पत्रमा नेपालसंवत् भएकोले नेपालसंवत्को मान्यता नेपालमा मात्र होइन, नेपालबाहिर पनि थियो भनी नेपालसंवत्का पक्षधरहरू चिच्याउँदैछन् । चीनका बादशाहले पलाञ्चोकका शासक शक्तिसिंहरामलाई लेखेको पत्रमा नेपालसंवत्को प्रयोग जरूर भएको छ, तर त्यहाँ त्यस संवत्लाई नेपालसंवत् नभनी महाचीनाब्द (महाचीनको संवत्) भनेकोले नेपालसंवत्का पक्षपातीहरूले महाचीन भनेको के हो र नेपालसंवत्लाई त्यहाँ किन महाचीनको संवत् भनेको हो ? यसको व्याख्या गर्नु पर्ने बेला आएको छ ।

पृथ्वीनारायण शाहको विजययात्रा शुरू हुनुभन्दा अगाडि पचास जति राज्यमा बाँडिएको नेपालमा तीन नेवार राज्यमा बाहेक अन्त कतै पनि नेपालसंवत्को गन्ध पनि थिएन । यस कारण पहिलेदेखि अहिलेसम्म अल्पसङ्ख्यकले मात्र मानेको संवत् बहुसङ्ख्यक नेपालीको साझा संवत् कसरी हुन सक्छ ?

यहाँनिर एउटा कुरा भन्नु छ । "नेपालले भारतीय मूलको विक्रमसंवत्लाई छोडेर नेपालसंवत्लाई राष्ट्रिय संवत्को रूपले लिनु राष्ट्रियता र राष्ट्रिय स्वाधीनतालाई बलियो पार्नको लागि पनि आवश्यक छ" भनी आज माग गर्नेहरूले देवनागरी लिपिमा लेखिएको नेपाली भाषालाई राष्ट्रभाषा मान्नाले देवनागरी लिपि भारतीय मूलको भएको र देवनागरी लिपि आजसम्म भारतमा पनि चलिरहेकोले र नेपाली भाषा भारतका हिन्दी बङ्गाली भाषाहरूको नजीकको हुनाले देवनागरी लिपिमा लेखिएको नेपाली भाषालाई हटाई अन्त कतै नचलेको, नेवारी लिपिमा लेखिएको, नामै नेपालभाषा भएको नेवारी भाषालाई राष्ट्रभाषा मान्नुपर्छ भन्ने माग भोलि अवश्य गर्नेछन् भनी हामीले विचार गर्नुपर्ने खण्ड आइसकेको छ । नेपालसंवत्का पक्षपातीहरूले नेवारी लिपिमा र नेवारी भाषामा नेपालसंवत्को राष्ट्रिय मान्यताको प्रचार गरेर यसको सङ्केत हामीलाई दिई पनि सकेका छन् ।

यस कारण विक्रमसंवत्को विरोध विक्रमसंवत्को मात्र विरोध होइन, राष्ट्रिय अखण्डताको विरोध हो; चार वर्ण ३६ जातको साझा फूलवारीको विरोध हो; अल्पसङ्ख्यकले बहुसङ्ख्यकमाथि आफ्नो संवत् मात्र होइन, लिपि र भाषा पनि लाद्ने कुचक्रको शुरूआत हो भन्ने कुरा हामीले बुझ्नुपरेको छ ।

[वि. सं. २०३८ मङ्सीर ८ गतेको विश्वदूत]

# नेपालसंवत्को राष्ट्रिय स्तरको मान्यताका हिमायती श्रीरत्नकृष्ण श्रेष्ठको लेखको विषयमा

विक्रमसंवत्को ठाउँमा नेपालसंवत्लाई राष्ट्रिय संवत्को मान्यता दिनुपर्छ भनी एकथरी अल्पसङ्ख्यकहरूले गरेको मागको विषयमा मैले प्रकट गरेको विचार यही कार्तिक १६ गतेको मानसमा छापिएको थियो । यसको जवाफमा श्रीरत्नकृष्ण श्रेष्ठले लेख्नुभएको लेख यही मङ्सीर ३ गतेको मानसमा छापिएको रहेछ ।

श्रेष्ठजीको जवाफमा कुनै तथ्य वा तर्क नभएकोले र त्यो खालि जवाफको लागि जवाफ भएकोले त्यसको विषयमा लेख्नु त्यति जरूरी थिएन तापनि उहाँको लेख पूरापूर बदनियतले लेखिएकोले र मेरो लेखभन्दा उहाँको लेख निकै लामो भएकोले उहाँको लेखबाट एकथरी सीधासाधा मानिसहरूमा भ्रम पर्न जाने डर भएकोले त्यस विषयमा केही लेख्नुपरेको छ ।

श्रीरत्नकृष्ण आफ्नो लेख यसरी शुरू गर्नुहुन्छ–

"नपाल संबत आज हामी नेपालीहरूले बिभिन्न कार्यक्रम गरेर मनाउँदै आएको यहां सबलाई बिदित होला ।"



नेपालसंवत् जसले मान्छन्, तिनीहरू जरूर नेपाली हुन्, यसमा सन्देह छैन । तर नेवारहरूबाहेक अरू बाँकी नेपालीहरूले के नेपाल-संवत् मान्छन् ? यस विषयमा श्रेष्ठजीले प्रकाश गरिदिनुभए हुन्थ्यो । पूर्व मेचीदेखि पश्चिम महाकालीसम्म फैलिएको, चार वर्ण ३६ जातको साझा फूलबारी भएको नेपाल अधिराज्यमा नेपालसंवत् कतिले मान्छन् ? सम्पूर्ण जनसङ्ख्याको कति अंशसँग नेपालसंवत् सम्बद्ध छ ? जरूर मैथिलहरू नेपालसंवत् मान्दैनन्, न त तामाङ थारू नै मान्छन् । न मगर गुरुङ नेपालसंवत् मान्छन, न त राई लिम्बू नै मान्छन् । यस सूचीलाई अझ पनि निकै लम्ब्याउन सकिन्छ रत्नकृष्ण श्रेष्ठजीलाई यतिले चित्त बुझ्दैन भने । के नेवारहरू मात्र नेपाली हुन् ? बाँकी भाषाभाषीहरूचाहिँ नेपाली होइनन् ? कसो श्रेष्ठजी, तपाईँ के भन्न हुन्छ ।

यस कारण नेपालसंवत्ले राष्ट्रिय मान्यता पाउनुपर्छ भनी कराउने, नेपालसंवत्का उत्साही पक्षपाती श्रीरत्नकृष्ण श्रेष्ठको पहिलो वाक्य नै अतिशयोक्तिदोषले दूषित छ भनी भन्नुपरेको छ ।

× × ×

उहाको दोस्रो वाक्य छ–

"नेपाल संवतलाई राष्ट्रिय स्तरबाट मान्यता हुनै पर्छ' भन्ने हाम्रो माग हो जनताको माग हो । हामी सबैको माग हो ।'

नेपालसंवत्लाई राष्ट्रिय स्तरको मान्यता हुनैपर्छ भन्ने माग हामी सबै जनताको हो भनी यहाँ श्रेष्ठजीले लेख्नुभएको छ । हुनत कुरा दोहऱ्याए जस्तो हुन्छ, किनभने मैले माथि लेखिएको कुराबाट उहाँलाई जवाफ पुग्छ । तर पनि म फेरि श्रेष्ठजीसँग सोध्छु ।

श्रेष्ठजी, नेपालसंवत्‌लाई राष्ट्रिय स्तरको मान्यता हुनैपर्छ भन्ने माग के तराईका बन्धुहरूको हो ? के भोटमूलका नेपालीहरूको हो ? के पर्वतेहरूको हो ? के नेवारबाहेक अरू नेपाली नेपाली होइनन् ? खालि अल्पसङ्ख्यक नेवारहरूको मागलाई हामी सबैको माग भन्न तपाईंलाई कताबाट प्रेरणा मिलेको छ ?

× × ×

श्रेष्ठजीको लेखाइको अर्को नमूना पनि हेरिहालौं —

"वहाँको विचारमा नेपाल सम्बत मान्ने अल्पसङ्ख्यक जनताहरू एकै ठाउँमा गुचमुचिएर रहेका छन् । वहाँको यस विचारबाट हामी धेरै जसो नेपालीहरूलाई थाहा हुन्छ कि वहाँ नेपालको ईतिहासकार भए पनि वहाँ देशको परिस्थितिको ज्ञाता हुनुहुन्न । किनभने वहाँले नेपाल सम्बत मान्ने जनताहरू एकै ठाउँमा मात्र गुजुल्टिएर बसेको देख्नु भएको रहेछ । तर नेपाल सम्बत मान्ने जनता नेपालको जताततै छ ।"

नेवारहरू खास गरी नेपालखाल्डो र यसको वरपर नै बसेका छन् । अन्त बाहिरफेर ठाउँठाउँमा बजार इलाकामा यिनीहरूको निकै पातलो बस्ती छ । यसबाहेक अन्त यिनीहरूको बस्ती छैन । यो कुरा नेपाल घुमेका वा नेपालको विषयमा पढेका जो कोहीलाई थाहा भएको कुरा हो । बाहिरफेरका नेवारहरूले आफ्नो भाषा आदि प्रायः छोडिसकेका हुन्छन् भन्ने पनि सबैलाई थाहै छ । नेपालखाल्डोका नेवारहरूले नेपालसंवत्‌को नववर्षारम्भ मान्न थालेपछि बाहिरफेरका नेवारहरूले पनि नेपालसंवत्‌को नववर्षारम्भ ठाउँठाउँमा मान्न थालेका छन् । यो त बेलायतमा नेपालीहरूले दशैं मा भोजभतेर गरेको कुरा जस्तो हो । यतिको आधारमा 'नेपाल सम्बत मान्ने जनता नेपालको जताततै छ' भनी भन्नु नेपालको भुवनकोशको वा सामानकालिक परिस्थितिको ज्ञान नहुनु अथवा जानाजान झूटो बोल्नु हो । रत्नकृष्णजी, तपाईं केमा पर्नुहुन्छ, यसो छातीमा हात राखेर विचार गर्नुस् त ।

× × ×

यसपछि श्रेष्ठजी लेख्नुहुन्छ—

"बहुसँख्यक नेपालीहरूको परम्परा देखि चलिआएकोले बिक्रम सम्बत नेपाली जनतामा भिजिसकेको छ, । यो वहाँले भन्नु पर्दैन । सबैलाई थाहा छ । व्यवहारमा चलेपछि जनतामा भिजिनु स्वाभाविक कुरा हो । परम्परा देखि चलेपछि जनतामा भिजिने मात्र होईन कि भोलि गएर जनताहरूले आफ्नो देश पनि बिदेश भएको जस्तो अनुभव अवश्य गर्छ । वहाँले आफ्नो अन्तर्वार्तामा बिक्रम सम्बत विदेशी सम्बत हो भनी बताइसकेपछि पनि किन यो सम्बत जनतामा भिजिसकेको छ भन्नु भएको होला? तर यस कथनले कति मान्छेलाई हँसाउँछ यो त हामी सबैले जाँची सकेका छौं । वरु वहाँले विक्रम संबत अराष्ट्रिय सम्बत होईन नेपाली सम्बत नै हो भन्न भएको भए वहाँको प्रमोशन झन्‌ै पनि बढ्ने थियो होला । यदि हामी यसैमा ठीक मान्ने हो भने पहिले देखि राष्ट्रिय सम्बत रहेको नेपाल सम्बत नै राष्ट्रिय सम्बत कायम गरी राखेको भए के यो विक्रम सम्बत भन्दा कम जनतामा भिजेको हुन्थ्यो होला ? झन्‌ यो त आफ्नै देशको जनताबाट जन्मेको सम्बत हो । यसमा पन्तले के विचार गर्नु भनेको होला यो विचार पुगेन अथवा .."

बिक्रमसंबत् नेपाली जनजीवनमा भिजेको र नेपालसंबत् खालि

एकथरी अल्पसङ्ख्यक भाषाभाषीहरूमा मात्र चलेकोले विक्रम संवत्को ठाउँ नेपालसंवत्ले लिन सक्दैन भनी मैले लेखेको हुँ पहिलेदेखि नेपालसंवत् कायम राखिरहेको भए नेपालसंवत् पनि विक्रमसंवत् भन्दा जनतामा कम भिजेको हुँदैनथ्यो होला भनी श्रेष्ठजीले यहाँ तर्क गर्न खोज्नुभएको छ । नेपालसंवत् कहिल्यै पनि नेवारराज्यमा बाहेक अन्त नचलेकोले यसलाई कायम गरिरहने प्रश्न नै उठ्दैन । पचास जति टुक्रामा टुक्रिएर अन्धकारमा डुबेको नेपालका तीन नेवार राजाका राज्यमा बाहेक अन्त कतै यो संवत् नचलेकोले यसलाई कायम राखिएन भनी श्रेष्ठजीले चित्त दुखाउनु बेकार छ ।

नेपालसंवत्लाई मैले अराष्ट्रिय संवत् भनी कहिल्यै भनेको छैन, भन्दिनँ पनि । नेपालका जनताले— भलै ती अल्पसङ्ख्यक किन नहून् — मानेपछि त्यो संवत् अराष्ट्रिय हुन सक्दैन । मैले नेपालसंवत् नेवारहरूमा मात्र चलेको संवत् हो, विक्रमसंवत् जस्तो नेपालमा जतातत्तै चलेको व्यापक संवत् होइन, यस कारण विक्रम संवत्को ठाउँ नेपालसंवतले लिन सक्दैन मात्र भनेको हुँ। फेरि मैले विक्रमसंवत्लाई विदेशी संवत् पनि भनेको छैन । मैले त यस विषयमा स्वदेशी विदेशी भनी छुट्टयाउने कसीको माग मात्र गरेको हुँ । मलाई सम्पूर्ण नेवार बन्धुहरूको कोपभाजन बनाउन, विक्रम संवत्का पक्षपातीहरूबाट अलग्याउन र सर्वसाधारणको दृष्टिमा गिराउन निकै तल्लो तहको चाल खेली श्रेष्ठजीले मेरो लेख बङ्ग्याउनुभएको छ भन्ने कुरा मेरो लेख पढेका मान्छेले सजिलैसँग बुझ्न सक्छन् ।



× × ×

कुनै पनि संस्कृतिको सीमा राजनीतिको सीमाभन्दा ठूलो हुने हुनाले विक्रमसंवत्लाई विदेशी भनी पन्छाउन सकिन्न, विक्रमसंवत्लाई विदेशी भनी पन्छाउने हो भने सनातन धर्मका र बौद्ध धर्मका ग्रन्थलाई पनि एकएक गरी पन्छाउनुपर्छ भनी मैले लेखेकोमा मेरो कुरा बङ्ग्याएर श्रेष्ठजी यस्तो लेख्नुहुन्छ–

"हामीले विक्रम सम्बत भारतमा कुनै समयमा चलेकोले अराष्ट्रिय सम्बत भनेको होईन । यसमा हामीले विचार गर्नु पर्छ कि यो कुनै समयमा भारतमा कुनै ठाउँको राष्ट्र भाषा पनि भैसकेकोछ । पन्तजीले भन्न भएकोछ यदि हामीले विक्रम सम्बतलाई अराष्ट्रिय सम्बत भनेर पन्छाउने हो भने विक्रम सम्बतको साथसाथै सनातन धर्मका र बौद्ध धर्मका ग्रन्थलाई पनि एकएक गरी पन्छाउनु पर्छ विदेशी धर्म ग्रन्थ भन्दै' । यसमा कहाँसम्म ठीक हो भनेर गहिरिएर हेरेको खण्डमा यसमा हामी देख्छौं की यो वहाँको कथन भोलि गएर सबैले मार्यौं भन त राष्ट्रियता जोगाउने कहाँ कहाँ मन राष्ट्र खतरामा पुग्छ । देश बेचेर विदेश पोस्ने जस्तो हुन्छ ।

किनभने यदि विक्रम संबत एउटा अराष्ट्रिय सम्वत हो भनेर पन्छाउन चाहनुभएको हो भने देखी पन्छाउनु पर्छ । तर वहाँले भन्न भएको जस्तो गरेर होइन । त्यसरी हामीले गर्‍यौं भने हामी आफ्ना खाल्टो आफैले खन्ने छौं । के हामी विदेशी सम्वत एउटा पन्छाउनको लागि स्वदेशी धर्म पनि पन्छाउनु पर्छ ? पन्छाउनु पर्दैन । किनभने यो सम्बत एउटा भारतबाट आएको भन्दैमा धर्म त्यहाँबाट आएको भनेका छैनौं । तर पन्तजीले भन्न

भएकोछ। यो त खाली वहाँले अएतबार्ता मात्र लम्घाएको बाहेक अरू केही होइन। वहाँको भनाई अनुसार त बौद्ध धर्म ग्रन्थ पनि पण्छाउनु पर्छ अझ बौद्ध धर्म नै पन्छाउनु पर्‍यो। वहाले यो धर्म पनि भारतबाठ नै आएको सम्झनु भएको छ। म पंतजीसङ्ग एउटा प्रश्न गर्छु 'पन्तजी तपाईंको बिचारमा बौद्ध धर्म भारतबाट आएको थियो। त्यसो भए भगवान बुद्ध पनि भारतमा जन्मनु भएको हो ?, यसको उत्तर हामी वहाँबाट यसरी पाउछौं होला- 'शायद होला'। 'त्यसो भए लुम्बिनी पनि भारत भयो ?' अनि वहाँले शायद यसरी जवाफ दिनु हुन्छ-'अहँ लुम्बिनी भारत भएको छैन।"

श्रेष्ठजीले नेपाली बौद्ध धर्मावलम्बीहरूको र राष्ट्रवादी नेपालीहरूको रिस ममाथि खनियोस भनी एउटा चाल चल्नुभएको छ। त्यो पनि यहां लेखिहालूँ।

बौद्ध धर्म कहाँबाट आयो ? बुद्ध कहाँ जन्मे? लुम्बिनी कहाँ पर्छ ? भनी श्रेष्ठजीले मसँग यहाँ सोध्नुभएको छ; तर यसको जवाफ मेरो तर्फबाट वहाँले आफैँले मनोमानी ढङ्गले दिनुभएको छ। यसरी वहाँले मलाई कुन रूपमा सीधासाधा जनताको अगाडि देखाउन खोज्नुभएको छ भन्ने कुरा बुद्धिजीवीहरूबाट नबुझिने छैन।

श्रेष्ठजीलाई म एउटा कुरा भन्छु। नेपालका बौद्ध धर्मावलम्बी-हरूका धर्मग्रन्थ नेपालको वर्तमान सिमानाभित्र बनेका होइनन् भन्ने कुराका प्रमाण जति भने पनि छन्। उदाहरणको लागि बौद्ध



धर्मावलम्बीहरूले पाठ गर्ने गरेको प्रसिद्ध स्तोत्र स्रग्धरास्तोत्र नै लिऊँ। स्रग्धरास्तोत्र काश्मीरका सर्वज्ञमित्रले बनाएका हुन् भन्ने कुरा श्रेष्ठजी जस्ता अबुझ सम्प्रदायवादीहरूलाई थाहा नभए पनि अरू धेरै बुद्धिजीवीहरूलाई थाहा छ।

× × ×

श्रीरत्नकृष्ण श्रेष्ठको यस लेखको बिषयमा लेख्न सकिने कुरा अझ पनि निकै नै बाँकी छन। तर मलाई डर लाग्छ, कहीँ मेरो एउटै लेखले मानसको पूरै अङ्क नढाकिदेओस्। रत्नकृष्णजीको लेखबाट सीधासाधा मानिसमा भ्रम पर्न नजाओस् भनेर मात्र मैले यो लेख लेखेको हुँ भनी मैले माथि लेखिसकेको छु। यति उदाहरणबाट रत्नकृष्णजीको लेखमा केही गुदी रहेनछ भन्ने कुरा जो कोहीले पनि बुझ्न सक्ने हुनाले म आफ्नो लेख यहीँ टुङ्ग्याउँछु।

[ वि. सं. २०३८ मङ्सीर २४ गते र पूस १ गतेको मानस ]

# नेपालसंवत्
# नेवार राज्यबाहिर चलेको थिएन

इतिहास दोहरिन्छ भन्ने कुरा त मैले पहिल्यै सुनेको हुँ, आफूले अनुभव गरेको भने थिइनँ, अहिले सैँतीस वर्षको उमेरमा राम्ररी नै अनुभव गर्ने मौका पाएँ । त्यो अनुभव तपाईंहरूलाई पनि बताइहालूँ कि ।

कुरा के भने नेपालको भुवनकोश, नृतत्त्व, इतिहास, संस्कृति, धर्म, कला, वास्तु, भाषा, वाङ्मय आदिको विषयमा तत्तद्विषयका विशेषज्ञ भनी कहलिएकाहरूको लेखको सङ्ग्रहरूपको नेपाल् इन् परस्पेक्टिभ् भन्ने पुस्तक वि. सं. २०३० मा छापिएको थियो । त्यस पुस्तकको सम्पादकमा श्रीकमलप्रकाश मल्ल पनि हुनुहुन्थ्यो । त्यहाँ मल्लजीको दि इन्टिलेक्च्युअल् इन् नेपलिज् सोसाइइटि ( नेपाली समाजमा बुद्धिजीवी ) भन्ने लेख पनि छापिएको थियो । त्यस लेखको शुरु दिस् इज् यान् एसए इन् इन्क्वाइरि इन् टु द पभ्अरटि अफ् इन्टिलेक्ट् इन् नेपाल् (यो निबन्ध नेपालमा बुद्धिको दारिद्र्यको खोजतलास गर्ने सिलसिलामा लेखिएको हो) भनी उहाँले गर्नु भएको थियो । त्यस पुस्तकमा सम्पादकको तर्फबाट लेखिएको



परिचयात्मक निबन्धको आलोचना वि. सं. २०३१ मा इतिहास-प्रधान त्रैमासिक पत्रिका पूर्णिमामा छपाउँदा मैले आफ्नो लेख शुरु गर्नु भन्दा अगाडि कमलप्रकाशजीको सोही वाक्य राखेको थिएँ र सो लेखमा नेपाल इन् परस्पेक्टिभ्का सम्पादकमै बुद्धिको दारिद्र्य भएको कुरा प्रमाण दिएर सिद्ध गरेको थिएँ ।

नेपालसंवत् नेवारहरूमा मात्र चलेको संवत् हो, विक्रम-संवत् भने नेपालमा जतातत्तै चलेको व्यापक संवत् हो; विक्रमसंवत्लाई विदेशी भनी छोड्ने हो भने यसको साथसाथै सनातन धर्मका र बौद्ध धर्मका ग्रन्थहरूलाई पनि एकएक गरी छोड्न सक्नुपर्छ; कुनै पनि ठूलो संस्कृतिको सीमा राजनीतिको सीमाभन्दा ठूलो हुने हुनाले विक्रमसंवत्लाई विदेशी भनी पन्छाउन सकिन्न भन्ने आशयको मेरो लेख वि. सं. २०३८ कार्तिक १६ गतेको मानसमा छापिएको थियो । अहिले मङ्सीर १० गते र १७ गतेको मानसमा श्रीदुर्गामानन्द वज्राचार्यले मेरो सो लेखको जवाफ दिन खोज्नुभएको रहेछ । त्यस लेखमा उहाँले एक ठाउँमा 'उहाँ जस्तो इतिहासकारबाट नेपालको इतिहास बारे तथ्यप्रती यस्तो वैचारिक गरीबी प्रदर्शन गर्नु जति विडम्बना अरू के होला र ?' भनी लेख्नुभएको रहेछ । 'वैचारिक गरीबी' मैले देखाएँ भनी वज्राचार्यजीले यहाँ जो लेख्नुभएको छ, त्यो 'वैचारिक गरीबी' मैले देखाएको होइन, बरु दुर्गामानन्दजीले नै देखाउनुभएको छ भन्ने कुरा बुझाउन यो लेख लेख्नुपरेको छ ।

अपशब्द, वाग्जाल, जल्प र वितण्डाले भरिएको श्रीदुर्गामानन्द वज्राचार्यको लेख "यथावत् प्रस्तुत" गरेर मानसका सम्पादकजीले

जुन औदार्य देखाउनुभयो, त्यसको तारीफ नगरी रहन सकिन्न । "सम्पादकजीको त्यस्तो औदार्य तथ्य र तर्कले भरिएको मेरो लेख यथावत् प्रस्तुत गर्नमा कायमै रहोस् र मेरो लेख काँटछाँट गर्ने कष्ट उहाँबाट नहोस् भन्ने बिन्ती गरेर अब म कुरा शुरू गर्छु ।

विक्रमसंवत्‌को व्यापकता देखाउने सन्दर्भमा मैले यस्तो लेखेको थिएँ-

"नेपालखाल्डोमा र यसका वरपरका इलाकामा नेवार राजाहरूले राज्य गर्दा यतातिर नेपालसंवत् पक्कै पनि चलेको थियो तापनि यतातिर पनि विक्रमसंवत् नौलो भने थिएन । विक्रमसंवत् पहिलेदेखि गोरखालगायत नेपालका सम्पूर्ण पहाडिया राज्यहरूमा चलेको थियो, तर नेपालसंवत् भने त्यतातिर कहिल्यै चलेको थिएन। जसरी नेपाली भाषाले पृथ्वीनारायण शाहको विजयभन्दा धेरै अगाडि बृहत्तर नेपालको साझा भाषाको रूप लिएको थियो, त्यसै गरी विक्रमसंवत् पनि पहिल्यैदेखि नेपाली जनजीवनमा भिजेको थियो भन्ने कुराका निकै प्रमाण जुटाउन सकिन्छन् ।"

मेरो यस कुरालाई वज्राचार्यजीले "कहाली लाग्दो झूठ" सिद्ध गर्न खोज्नुभएको छ । वज्राचार्यजीको लेख निकै धूर्ततापूर्वक लेखिएको हुनाले यसबाट साधारण शिक्षितहरूलाई भ्रम पनि पर्न जानु असम्भव छैन। यस कारण यस विषयमा अलि खुलाएर नै लेख्नुपरेको छ ।

नेपालको तिथिमितियुक्त प्रामाणिक इतिहास १५ सय चानचुन वर्षभन्दा पुरानो छैन । नेपालमा पहिले शकसंवत् (बि. सं.



१३५ देखि शुरू भएको) चलेको थियो र त्यसपछि मानदेवसंवत् (वि. सं. ६३३ देखि शुरू भएको) चल्यो भन्ने कुरा नेपालको इतिहास जान्नेहरूलाई थाहा भएकै कुरा हो ! लिच्छविकालमा नेपाल राज्यको क्षेत्रफल वर्तमान नेपाल राज्यको क्षेत्रफलभन्दा कम थिएन भन्ने कुरा पनि पूर्वाग्रहले पीडित मान्छेहरूले बाहेक अरूले मानेकै कुरा हो । मानदेवसंवत्‌पछि नेपालसंवत् (वि.सं. ९३६ देखि शुरू भएको) चल्न थाल्यो भन्ने कुरा पनि इतिहास पढ्नेहरूलाई थाहा भएकै कुरा हो ।

लिच्छविकालपछि नेपाल राज्य क्रमशः टुक्रिँदै गयो । नेपालखाल्डोमा राजधानी भएको नेवार-राज्य, सिम्रौनगढमा राजधानी भएको तिरहुते राज्य र सिंजामा राजधानी भएको खस राज्य गरी यी तीन राज्यमा पछि गएर पुरानो नेपाल बाँडियो । यी तीन राज्यले ओगटेका ठाउँमा पछि गएर क्रमशः पचास जति राज्य खडा भए । ती पचास जति राज्यमध्ये नेपालखाल्डोमा राजधानी भएका तीन नेवार राज्यलाई छोडेर अन्त नेपालसंवत्‌को चलनचलती थिएन भन्ने कुरा त्यस वेलाका लिखत केलाएर हेरेको खण्डमा थाहा नपाइने होइन । ती तीन नेवार राज्यमा पनि विक्रमसंवत् नौलो थिएन भन्ने कुरा पनि तात्कालिक लिखितबाट स्पष्टै बुझिन्छ । मैले विक्रमसंवत्‌को व्यापकता र नेपालसंवत्‌को सीमितताको विषयमा जुन विचार प्रकट गरेको थिएँ, त्यो विचार एकीकरणभन्दा अघिको नेपालको सन्दर्भमा थियो ।

अहिले दुर्गामानन्दजीले "सफेद झूठहरू" बोल्ने, "ऐतिहासिक सत्यमाथि कालो पर्दा" हाल्ने 'ऐतिहासिक तथ्याङ्कबारे . . . भ्रम

सृजना गर्ने' आदि बिभूषणले मलाई विभूषित गर्दै मेरा कुरा बङ्ग्याएर यस्तो लेख्नुभएको छ–

"नेपाल सम्बत नेवार राजाहरूको पालामा नेपाल खाल्डो भित्र मात्र चलेको र अन्य पहाडी राज्यहरूमा चलेको थिएन भन्ने श्री पंतज्यूको तर्क कस्तो कहाली लाग्दो झूठ भन्ने कुरा तल प्रस्तुत ऐतिहासिक तथ्यहरूले उदाङ्गो पारेको छ।

१) राजा नरेन्द्र देव र उदयदेवको राज्यकालमा 'गण्डी गुल्म' (वर्तमान गुल्मी) मा लेखिएको नेपाल सम्बत ११६ को 'अष्ट साहस्त्रिका प्रज्ञापारमिता'

२) राजा हर्ष देवको राज्यकालमा लेखिएको ने. सं. २१६ को 'गण्डी गुल्म' विषयमा लेखिएको पुस्तक

३) राजा उदयदेव राज्यकालको 'जिग्लो दगम विषय' (वर्तमान पश्चिमाञ्चल) मा तामाको मूर्तिको पादपीठमा कुंदिएको ने. सं. १२४ को अभिलेख

४) वर्तमान उदयपुरमा लेखिएको ने. सं. १८६ को 'सद्धर्म पुण्डरीक' नामक ग्रन्थ

५) ने. सं. १८६ मा लमजुङ्गमा लेखिएको एक ग्रन्थ

६) 'मग्वर विषय' (वर्तमान नगरात) मा कुंदिएको ने. सं. २२१ शिव देवको पालाको ताम्रपत्र

७) उदयपुरमा लेखिएको ने. सं. २४८ को 'नक्षत्र जातक' पुस्तक

८) ने. सं. २७० मा 'पन्नग विषय' मा कुँदिएको ताम्रपत्र

९) ने. सं. २८२ मा 'पन्नग विषय' मा लेखिएको ग्रन्थ



१०) धवलस्त्रोपपुर(वर्तमान धवलागिरी अञ्चल)मा लेखिएको ने. सं. २२०, ३०३ र ३०४ का हस्तलिखित ग्रन्थहरू

११) ने. सं. ३२१ मा लेखिएका 'पञ्चावत देशविषय' ग्रन्थ

यी भए नेवार राजाहरू(पन्तज्यूको अर्थमा मल्लराजा?)को राज्यकाल भन्दा अगाडि तथा काठमाडौं उपत्यका भन्दा बाहिर नेपालको अन्यत्र इलाकामा नेपाल सम्बत चलनचल्तीमा आएका सबूदहरू"

दुर्गामानन्दजी !

तपाईंले मेहनत गरी तयार गर्नु भएको यस सूचीमा पनि एक दुइवटा छुटेका रहेछन। भैगो, तपाईंको तर्फबाट म नै थपिदिन्छु।

१) ने. सं. २०० चानचुनमा वासदेवको पालामा उदयपुरमा सारिएको सेकनिर्देशपञ्जिका

२) ने सं. २८५ मा आनन्ददेवको पालामा गण्डीगुल्ममा सारिएको अष्टसाहस्त्रिका प्रज्ञापारमिता

दुर्गामानन्दजी !

"यी भए नेवार राजाहरू (पंतज्यूको अर्थमा मल्ल राजा?) को राज्यकालभन्दा अगाडि ... नेपाल सम्बत चलनचल्तीमा ल्याइएका तथ्यहरू" भनी तपाईंले लेख्नुभएकोले अर्थात् नेवार राजा भनी मैले लेखेकोमा तपाईंले त्यसको व्याख्या मल्ल राजा भनी गर्नुभएकोले ने. सं. ३२१ मा अरि मल्लको पालामा पञ्चावतदेशविषयमा लेखिएको ग्रन्थको प्रमाण दिन यहाँ कसरी सुहाउँछ ? तपाईं आफैं नै विचार गर्नु होस्।

भैगो यो सानोतिनो कुरा छोडिदिऔं। मुख्य कुरापट्टि नै लागौं।

यहाँ दुर्गामानन्दजीले पचास जति टुक्रामा बाँडिनुअघिको नेपालमा नेपालसंवत् चलेको थियो भन्ने प्रमाण तेर्स्याएर "नेपाल खाल्डोमा र यसका वरपरका इलाकामा नेवार राजाहरूले राज्य गर्दा यतातिर नेपालसंवत् पक्कै पनि चलेको थियो तापनि यतातिर पनि विक्रमसंवत् भने नौलो थिएन । विक्रमसंवत् पहिलेदेखि भने गोरखालगायत नेपालका सम्पूर्ण पहाडिया राज्यहरूमा चलेको थियो, तर नेपालसंवत् भने त्यतातिर कहिल्यै चलेको थिएन" भन्ने मेरो कुराको खण्डन कसरी भयो ? यो बडो आश्चर्यलाग्दो छ । वहाँले जुटाउनुभएका ती प्रमाण ती पहाडिया प्रदेश स्वतन्त्र राज्य हुनुभन्दा अगाडिका हुन । मैले प्रयोग गरेको "पहाडिया राज्यहरू" भन्ने शब्दलाई वहाँका यी प्रमाणले कसरी काट्छन् ? यसलाई वहाँले स्पष्ट गर्नु परेको छ ।

यहाँनिर एउटा कुरा पनि भनिहालूँ । नेपालसंवत्को शुरूआतको साथसाथै लिखतहरू अकस्मात् विरलाकोटि पाइन थाल्छन । त्यसमा पनि नेपालसंवत्को शुरूआतदेखि स्थिति मल्लको उदय नभएसम्म अर्थात् पाँच सय वर्षसम्म शासकका कुनै लिखत नपाइनु यस ताकाको अर्को विशेषता हो । त्यसमाथि त्यस ताकाका लिखत संस्कृतभाषाको दृष्टिले निम्नकोटिका हुनुको कारण के हो ? यो पनि अहिलेसम्म हामीले बुझ्न सकेका छैनौं । हुन त लिच्छविकालका लिखतमा पनि आर्यभाषाभन्दा बाहेकका अरू भाषासँग मिल्ने केही शब्द नपाइने होइनन् । तर त्यस्ता शब्द खास गरी खोलानाला, डाँडाकाँडा, करसरसम्बन्धी नै छन् । तर पछि आएर अर्थात् नेपालसंवत्को चलनचलती भइसकेपछि नेवारी शब्दको



प्रयोग बढी हुँदै गएको प्रमाण जुटाउन सकिन्छ । साथसाथै नेवारी भाषाका लिखत पनि यही समयमा भेट्टाइन्छन् । यस कारण नेपालसंवत्को चलनचलती भइसकेपछि यहाँ नेवारी प्रभाव बढेको कुरामा शङ्का गर्ने ठाउँ छैन । नेपालसंवत्को शुरूआत भएपछिका केही सय वर्षसम्म पनि नेपाल पूर्णतया ढुक्किसकेको थिएन, तर केन्द्रमा बसी शासन गर्नेहरूमा नेवारी प्रभावचाहिँ बढ्दै गएको थियो । यस कारण नेपालसंवत्को शुरूआत भएपछिका केही सय वर्षसम्मका, नेपालखाल्डोबाहिरका लिखतमा नेपालसंवत्को प्रयोग भएको देखाएर नेवारहरूको राज्यक्षेत्रभन्दा बाहिर नेपालसंवत् चलेको थिएन भन्ने मेरो कुरा काटिँदैन, बरु यसबाट मेरो कुरा नै बढी पुष्ट हुन्छ ।

यसपछि दुर्गामानन्द वज्राचार्यजी यस्तो लेख्नुहुन्छ–

"अब यी प्रस्तुत छन् मल्लकालमा उपत्यका बाहिर पनि नेपाल सम्वतलाई व्यवहारमा ल्याइएका तथ्यहरू:-

१. ने. सं. ८१५ को प्यूठान शिव मन्दिरको अभिलेख

२. ने. सं. ८३४ को लमजुङमा प्राप्त अभिलेख

३. ने. सं. ८२४ को गुल्मीमा प्राप्त अभिलेख

४. ने. सं. ८७६ को प्यूठान लक्ष्मीनारायण स्थानको एक सालिकमा अङ्कित अभिलेख

५. ने. सं. ८८६ को प्यूठान भिमसेन स्थानको एक सालिकको अभिलेख

६. ने. सं. ५३५ मा मिनवंशी चिनियाँ बादशाले सामन्त शक्तिसिंहलाई लेखेको 'परवाना' पत्र"

दुर्गामानन्दजीले दिनुभएका यो प्रमाणभन्दे चीनका बाद-शाहले शक्तिसिंहरामलाई लेखेको परवानालाई छाडेर अरू लिखत छापिएको देखिएको छैन। पोहर खेलुइताः भन्ने पत्रिकामा श्रीधनवज्र वज्राचार्यको नेपाल सम्वत् या ऐतिहासिक महत्व [नेपालसंवतको ऐतिहासिक महत्त्व] भन्ने लेख छापिएको थियो। त्यस लेखमा यस विषयमा श्रीधनवज्र वज्राचार्यले सूत्ररूपमा लेख्नुभएको कुरालाई अहिले श्रीदुर्गामानन्द वज्राचार्यले व्याख्या गर्नभएको छ। सबभन्दा पहिले श्रीधनवज्र वज्राचार्यको सो लेखेको सम्बद्ध अंश पढौँ–

"थ्व हे परम्पराय् लिपा चौबीसी राज्य खडा जुइ धुंकाः नं लम्जुङ्ग, गुल्मी, प्युठान भेकय् नेपल संबत ८०० रिख्वया अभि-लेखत लूगु दु। थ्व खं 'नेपालसंवत' या व्यापकता स्पष्ट क्य'।

अन्तर्राष्ट्रिय स्तरय् नं 'नेपाल संबत' या प्रचलन छुं रूपय् भचाभचासां जुगु दगु लूगु दु। प्रमाणार्थ चीनया मिनवंशी बाद-शाहं नेपालया सामन्त जुजु शक्तिसिंहराम वर्द्धनयात च्वःगु 'परवाना पत्र' यात क्वने फु। व परवाना-पत्रया सकल परराष्ट्र मन्त्रालयय् दु। रञ्जना लिपिइ संस्कृत भाषं च्वयाहःगु व पत्रय् नेपाल संवत् ५३५ बिया तःगु दु। थुकिं रञ्जना लिपि नापं नेपाल संवतया नं प्रचलन छुं अंशय् जक जुसां चीनय् जूगु स्पष्ट खनेदु।"

[यही परम्परामा पछि चौबीसी राज्य खडा भइसकेपछि पनि लम्जुङ, गुल्मी, प्यूठान भेकमा नेपालसंवत् ८०० ताकाका अभिलेख देखिएका छन्। यस कुराबाट नेपालसंवतको व्यापकता स्पष्ट देखिन्छ।



अन्तरराष्ट्रिय स्तरमा पनि नेपालसंवत्‌को प्रचलन केही रूपमा अलि अलि भएको प्रमाण देखिएको छ। प्रमाणार्थ चीनका मिङवंशी बादशाहले नेपालका सामन्त राजा शक्तिसिंहरामवर्धनलाई लेखेको परवानापत्रलाई देखाउन सकिन्छ। त्यस परवानापत्रको सकल परराष्ट्रमन्त्रालयमा छ। रञ्जना लिपिमा संस्कृतभाषामा लेखिएको त्यस पत्रमा नेपालसंवत् ५३५ दिइएको छ। यसबाट रञ्जना लिपिसँगसँगै नेपालसंवतको प्रचलन केही अंशमा भए पनि चीनमा भएको स्पष्ट प्रमाण पाइन्छ।]

वि. सं. २०३४ को भ्वाइस् अफ् हिस्टरि भन्ने पत्रिकामा श्रीधनवज्र वज्राचार्य र श्रीटेकबहादुर श्रेष्ठको लम्जुङको ऐतिहासिक झलक भन्ने लेख छापिएको छ। त्यस लेखबाट लम्जुङमा ने. सं. ८३५ को अभिलेख पाइएको छ भन्ने बुझिन्छ। सो लेखको सम्बद्ध अंश यस प्रकारको छ–

"यस भेकमा देवनागरी लिपि र विक्रम शक आदि संवत् पछि खस राज्यको प्रसार भएपछि मात्र भएको देखापरेको छ। यस भेकमा नेपालसंवत र नेवारी लिपिको प्रचलन अलिकता अंशमा पछिसम्म पनि चलेको थियो भन्ने कुरा लम्जुङमा प्राप्त अभिलेखले दर्शाएको छ।"

यसको टिप्पणीमा उहाँहरू लेख्नुहुन्छ–

"सर्वेक्षणक्रममा लमजुङमा ने. सं. ८३५ को नेवारी लिपि नेवारी भाषामा लेखिएको अभिलेख प्राप्त भएको छ।"

प्यूठान, लम्जुङ र गुल्मीका ती अभिलेख पढ्न नपाइएकाले ती अभिलेख कसले राखे भन्ने विषयमा अहिले किटेर भन्न

सकिँदैन तापनि अडकल भने गर्न नसकिने होइन। गोरखाली राजा राम शाह र पाटने राजा सिद्धिनरसिंह मल्लले गरेको सन्धि-अनुसार २४ कोठी महाजन बन्दबेपार गर्न भनी पाटनबाट गोरखा गई बसोबास गर्न थाले भन्ने कुरा वंशावलीबाट बुझिन्छ। यस्तै छाँटले नेवारहरू व्यापारको सिलसिलामा गोरखामा गए जस्तै प्यूठान, लम्जुङ र गुल्मीमा पनि गएर बसोबास गरे होलान् र ती ती ठाउँमा उनीहरूले आफ्ना लिखतमा नेपालसंवत्को प्रयोग गरे होलान्। व्यापार आदि व्यवसायको निमित्त नेपालखाल्डो-बाट बाहिर लागेका नेवारहरूले राखेका अभिलेखमा नै नेपाल-संवत्को प्रयोग भएको हो भन्ने कुरा पाटन वकुबहिबाट गई भोजपुरमा बसोबास गरेका नेवारले भोजपुरमा आफूले राखेको अभिलेखमा नेपालसंवत्को प्रयोग गरेकाले बुझिन्छ। पाटन-बाट गई भोजपुरमा बसोबास गरेका नेवारले राखेको सो अभिलेख कविकेशरी श्रीचित्तधर 'हृदय'ले आफूले सम्पादन गर्नु भएको नेपाल भाषा साहित्य या जातः मा प्रकाश गर्नु भएको छ।

अब बाँकी रह्यो चीनका बादशाहले शक्तिसिंहरामलाई लेखेको पत्रमा नेपालसंवत्को प्रयोग भएको कुरा। त्यस पत्रमा नेपालसंवत्को प्रयोग जरूर भएको छ, यसमा कति पनि शङ्का छैन। तर त्यहाँ नेपालसंवत्लाई महाचीनाब्द [महाचीनको संवत्] भनेको छ। यसकारण महाचीन भनेको के हो र नेपालसंवत्लाई त्यहाँ महाचीनको संवत् भनेर किन भनेको हो ? यसको व्याख्या श्री-दुर्गामानन्द वज्राचार्यले वा उहाँको बुद्धिले नभ्याएको खण्डमा



अहिलेसम्म पर्दाभित्र बसी उहाँलाई सुच्याउने वरिष्ठ विद्वान्हरूले गरिहाल्नुपर्ने बेला आएको छ।

× × ×

यसपछि श्रीदुर्गामानन्द यस्तो लेख्नुहुन्छ–

"यस्तै श्री ५ बडा महाराजाधिराजबाट ने. सं. ८८८मा नेपाल-को एकीकरण गरिबक्से पछि पनि गोरखा समेत नेपालका अन्यत्र भागमा नेपाल सम्वत प्रयोगमा ल्याइएका केही ऐतिहासिक सत्य पनि यी हुन्ः–

१. ने. सं. ८६५ मा राजा प्रतापसिंहको राज्यकालमा नेपाल-भोट बीच भएको सन्धी पत्र

२. गोरखा दरबारको हनुमान स्थानमा ने. सं. ९३७ उल्लेखित अभिलेख

३. धरान, विजयपुरमा प्राप्त ने सं. ९०० को अभिलेख

४. यस्तै भोजपुर, दबुली धनकुटाको पाटी, दोलखा, नुवाकोट आदि स्थानमा शाहकालीन अभिलेख आदि–"

यहाँ दुर्गामानन्दजीले ने. सं. ८८८ [वि. सं.१८२५] मा श्री ५ बडामहाराजाधिराजबाट नेपालको एकीकरण गरिबक्स्यो भनेर जुन लेख्नुभएको छ, यसमा मेरो पूरापूर आपत्ति छ। पचास जति टुक्रा मा बाँडिएर अन्धकारमा डुबेको नेपाललाई एक पार्ने काम पृथ्वीनारायण शाहबाट शुरू भई वि. सं. १८२५ सम्म खालि चार राज्यमा मात्र अर्थात् गोरखा, मकवानपुर, काठमाडौँ र पाटनमा मात्र उनको अधिकार जमेको थियो। बाँकी कासेकम ४६ राज्यलाई पनि एकीकरणरूपी मालाको फूलका

शुरू बनाउने काम बाँकी नै थियो । यस कारण वि. सं. १८२५ मा नेपालको एकीकरण कसरी भयो ? यो आश्चर्यलाग्दो छ । सम्प्रदायवादीहरूले जस्तै नेपालखाल्डोलाई मात्र नेपाल माने पनि यस बेला भक्तपुर जित्न पनि बाँकी नै थियो । दुर्गामानन्दजी ! तपाईँको नेपाल कत्रो हो ? यसको उत्तर दिनुहुन्छ कि ?

यस प्रसङ्गमा १३ वर्ष पुरानो एउटा कुराको सम्झना आयो । यो पनि तपाईँहरूलाई बताइहालूँ ।

नेपालको एकीकरणको २ सय वर्षको जयन्ती वि. सं. २०२५ इन्द्रजात्राको दिन यहाँ धूमधामसँग मानेको देखियो । नेपालको एकीकरण त वि. सं. १८०१ आश्विन १५ गते नुवाकोट जितेदेखि शुरू भएको हो; काठमाडौँ विजय त न एकीकरणको शुरू हो, न अन्त्य हो । यसैले काठमाडौँविजयको दिनलाई नेपालको एकीकरणदिवस मानेकोमा मलाई चित्त बुझेको थिएन । त्यस ताका एक अङ्ग्रेजी दैनिक पत्रिकाका सम्पादकसँग मेरो विशेष उठबस थियो र उहाँसँग मैले यस विषयमा कुरा पनि गरेँ । उहाँले एउटा लेख लेख्नुहोस् त, म छापिदिन्छु भनी भन्नुभयो र मैले लेख लेखेर उहाँलाई दिएँ । डिड् वी सेल्इब्रेट् द रीअल् यूनिफिकेशन् डे ? [के हामीले वास्तव एकता दिवस मनायौँ त ?] भन्ने शीर्षक भएको मेरो सो लेख सम्पादकजीले कुन्नि कति कारणले हो, छपाउनुभएन र सो लेख यसै थन्किएर रहेको थियो । सो लेखको महत्त्व बुझी श्रीउपेन्द्र गौतमले सो लेख छपाउने आँट गर्नुभएकोले चार वर्षपछि वि. सं. २०२९ मा रसायन पत्रिकामा



सो लेख छापियो । सो लेखको उपसंहार मैले यसरी गरेको थिएँ । यो पनि तपाईँहरूलाई सुनाइहालूँ –

“फ्रम द अबभ् अकाउन्ट, वन् क्यान् क्लीयरलि अन्डरस्ट्यान्ड् थाट् पृथ्वी नारायण् शाह लेफ्ट् नो स्टोन् अनटर्न्ड् इन् लेयिङ् फाउन्डेशन् फर् नेपाल्'ज् यूनिफिकेशन् । दस् द कङ्क्वेस्ट् अफ् नुवाकोट् वज् द ल्यान्ड-मार्क् इन् द हिस्टरि अफ् नेपाल्'ज् यूनिफिकेशन् । याज् द फाउन्डेशन् अफ नेपाल्'ज् यूनिफिकेशन, वज् दस् लेड् अन् थाट् भेरइ डे अफ् ट्राइअम्फ् ओभर् नुवाकोट्, द १५थ् डे अफ् आश्विन्, शूड् ह्याभ् बीन् अब्जर्भ्ड् याज् द यूनिफिकेशन् डे । इट् इज् हार्ड् फर् ए लेम्यान् टु अन्डरस्ट्यान्ड् ह्वाइ दि इन्टिलेक्च्यूअल्ज् अफ् नेपाल् रिगार्डइङ् द कङ्क्वेस्ट् अफ् काठमान्डु याज् द डे अफ् यूनिफिकेशन् । द कङ्क्वेस्ट् अफ् काठमान्डु वज् नाइदर् द बिगिनइङ् नर् द एन्ड् अफ् द टास्क् अफ् नेशनल् यूनिफिकेशन् । द काठमान्डु भिक्ट्रि वज् मीर्लि यान् ईभेन्ट्, दो ए भेरइ इमपर्टयान्ट् वन्, टुलिङ्क् ए लङ् चेन् अफ् ईभेन्ट्स् ह्विच् कन्टिन्यूड् ईभन् आफ्टर् पृथ्वीनारायण'ज् डेथ् ।”

[नेपालको एकताको जग हाल्ने काममा पृथ्वीनारायण शाहले सम्भव भएसम्मको हरएक उपायले कोशिश गरेका थिए भन्ने कुरा माथिको बयानबाट जो कोहीले पनि स्पष्टसँग बुझ्न सक्छ । यसरी नुवाकोटविजय नेपालको एकताको इतिहासमा विशिष्ट घटना थियो । नेपालको एकताको जग यसरी नुवाकोट जितिएकै दिन हालिएकोले आश्विन १५ गतेलाई एकतादिवसको

रूपमा मान्नुपर्थ्यो । नेपालका बुद्धिजीवीहरूले काठमाडौँ विजय-लाई एकतादिवस भनी किन सम्झे भनी बुझ्न उनाउ मान्छेलाई गाह्रो छ । काठमाडौँ विजय राष्ट्रिय एकताको कामको न आदि हो, न अन्त्यै हो । काठमाडौँ विजय ठ्याडै मुख्य घटना भए पनि पृथ्वीनारायणको मृत्यु भइसकेपछि पनि भइरहेका घटनाका लामो सिलसिलामा जोडिने खालको एउटा घटना मात्र हो ।]

अब पृथ्वीनारायण शाहले नेपालखाल्डो जितिसकेपछि "गोरखा समेत नेपालका अन्यत्र भागमा नेपाल सम्वत प्रयोगमा ल्याइएका केही ऐतिहासिक सत्य" भनी दुर्गामानन्दजीले दिनु-भएका प्रमाणको विषयमा कुरा गरौँ ।

सबभन्दा पहिले प्रतापसिंह शाहले भोटे अधिकारीहरूलाई लेखेर दिएको धर्मपत्रको कुरा गरौँ । त्यस धर्मपत्रमा नेपाल-संवत्‌को मात्र प्रयोग भएको होइन, सो धर्मपत्र नै नेवारी भाषामा लेखिएको छ । भोटसँग नेवार राजाहरूको पालादेखि विशेष सम्बन्ध थियो र ३२ कोठी नेवार महाजनहरू भोटमा बन्दबेपार गरेर बसेका थिए। पृथ्वीनारायण शाहले नेपालखाल्डो जित्नुभन्दा अगाडि भोटमा नेवार राजाहरूका टकसुद्धा निर्बाध रूपले चल्ने गरेका थिए । अर्को शब्दमा भन्ने हो भने भोटमा नेवार व्यापारीको रज-गज, नेवार राजाको टकको चलनचलती भएकोले भोटमा नेवारी प्रभाव बढी थियो । यिनै ऐतिहासिक कारणले गर्दा प्रतापसिंह शाहले भोटे अधिकारीहरूलाई लेखेर दिएको धर्मपत्र नेवारी भाषामा लेखिएको हो र त्यस धर्मपत्रमा नेपालसंवत्‌को प्रयोग भएको हो ।



दुर्गामानन्दजी !

तपाईँलाई एउटा कुरा म भन्छु, सुन्नुहोस् ।

भोटे अधिकारीहरूले पृथ्वीनारायण शाहलाई लेखिदिएको धर्मपत्र नेपाली भाषामा छ र त्यहाँ विक्रमसंवत्‌को प्रयोग भएको छ । तपाईँ आज भोटे अधिकारीहरूलाई प्रतापसिंह शाहले नेवारी भाषामा लेखिएको धर्मपत्रमा नेपालसंवत्‌को प्रयोग भएको प्रमाण देखाएर शाह राजाहरूको पालामा पालसंवत्‌को चलनचलती भएको कुरा सिद्ध गर्न खोज्नुहुन्छ भने भोलि अर्को मान्छे आएर पृथ्वीनारायण शाहलाई भोटेका अधिकारीहरूले नेपाली भाषामा लेखिदिएको धर्मपत्रमा विक्रमसंवतको प्रयोग भएको प्रमाण देखाएर पूर्व मेचीदेखि पश्चिम महाकालीसम्म फैलिएको नेपाल अधिराज्य-मा मात्र होइन, नेपालको उत्तरपट्टिका छिमेकी राज्य भोटमा सुद्धा विक्रमसंवत्‌को चलनचलती भएको कुरा उसले सिद्ध गर्न खोज्यो भने तपाईँ यसको जवाफ कसरी दिनुहुन्छ ?

दुर्गामानन्दजी!

इतिहासमा यस्ता फाटफुटे प्रमाण यदाकदा मिल्न सक्छन् । यस्ता प्रमाणको आधारमा नेपालसंवत्‌को व्यापकता सिद्ध हुन सक्दैन भन्ने कुरा तपाईँलाई थाहा नभए पनि तपाईँका गुरुहरूलाई त अवश्य थाहा हुनुपर्ने हो ।

अब बाँकी रह्यो शाहकालमा राखिएका गोरखा हनूमान्‌स्थान-को, विजयपुरको, भोजपुरको डुब्लीको, धनकुटाको पाटीको अभिलेखमा नेपालसंवत्‌को प्रयोग भएको विषय ।

दुर्गामानन्दजीले भोजपुरको डबलीको भनी मन्नुभएको अभिलेख कविकेशरी श्रीचित्तधर'हृदय'ले छपाउनुभएको भोजपुरको अभिलेखभन्दा फरक हो कि उही हो, म भन्न सक्दिनँ। उही हो भने पाटन उकुबहीबाट गएका नेवारले भोजपुरमा आफ्नो भाषामा राखेको अभिलेखमा आफ्नो संवत्को प्रयोग गरे त कत्रो ठूलो कुरा भयो ? उही होइन भने पनि त्यो अभिलेख पनि नेवारले नै राखेको होला भन्ने कुरा हामी अड्कल गर्न सक्छौं। गोरखा हनूमानस्थानको, विजयपुरको, धनकुटाको पाटीको अभिलेख छापिएको देखिएको छैन। ती अभिलेख नेवारबाहेकका अरू भाषाभाषीले राखेका हुन् भनेर सिद्ध नगरेसम्म यी प्रमाणबाट नेपालसंवत्को व्यापकता होइन, उल्टो सीमितता पो सिद्ध हुन्छ।

अब बाँकी रह्यो दोलखा र नुवाकोटका शाहकालका अभिलेखमा नेपालसंवत् प्रयोग भएको विषय।

दोलखा र नुवाकोट दुवै नेपालखाल्डोबाहिर भए पनि यी दुवै नेवार राज्यभित्र पर्थे। दोलखा त सय वर्ष जति काठमाडौँ, पाटन, भक्तपुरकै हाराहारीमा स्वतन्त्र राज्य पनि भयो। नुवाकोट पहिलेदेखि अर्थात् सिंजामा खस राज्यको स्थापना भएपछि नेवार राज्यको पश्चिमी सीमाना भएर रहेको थियो। पछि पनि अर्थात् वि. सं. १८०१ मा पृथ्वीनारायण शाहले जित्नुभन्दा अगाडिसम्म नुवाकोट काठमाडौँ राज्यमै पर्थ्यो। यस कारण दोलखा र नुवाकोट दुवैमा नेवारहरू पहिले पनि प्रशस्त थिए, अहिले पनि छन्। अर्को शब्दमा भन्ने हो भने ती दुवै ठाउँमा नेवारी भाषा र चालचलन अझ हराएको छैन।



श्रीधनवज्र बज्राचार्यले र श्रीटेकबहादुर श्रेष्ठले दोलखाको ऐतिहासिक रूपरेखा र नुवाकोटको ऐतिहासिक रूपरेखा प्रकाश गरिदिएर इतिहासरसिकहरूलाई ठूलो गुन लाउनुभएको छ। ती ग्रन्थबाट शाहकालमा नेवारहरूका घरायसी लिखतमा वा नेवारहरूले राखेका अभिलेखमा नेवारी भाषाको र नेपालसंवत्को प्रयोग भएको स्पष्ट बुझिन्छ। यसको साथसाथै शाहकालमा नेवारहरूकै घरायसी लिखतमा नेपाली भाषाको र विक्रमसंवत्को प्रयोग भएको कुरा पनि श्री धनवज्र वज्राचार्य र श्रीटेकबहादुर श्रेष्ठले प्रकाश गर्नुभएका लिखतबाट स्पष्ट बुझिन्छ भन्ने कुराको पनि यहाँ चर्चा गर्नैपर्छ।

यस्ता कुराका आधारमा नेवार राज्यबाहिर नेपालसंवत् चलेको थिएन भन्ने मेरा मूल सिद्धान्त कसरी काटिन्छ? यो दुर्गामानन्दजालाई र उहाँका गुरुजनलाई मात्र थाहा होला।

× × ×

यसपछि श्रीदुर्गामानन्द बज्राचार्यको लेख यसरी अघि बढ्छ–

'काठमाडौं उपत्यका वा मल्ल राजाहरूको अधिन भन्दा बाहिर का क्षेत्रहरूमा समेत नेपाल सम्बत प्रचलन भएका उपरोक्त संक्षिप्त तथ्यहरूले नै श्री पंतज्यूको तर्क कति निकृष्ठ र बकवासपूर्ण भनेर साबित गर्छ। आवश्यक ठानिएमा प्रस्तुत तथ्यहरूको पूर्ण विवरण र यो भन्दा पनि बढी अनेकौं प्रमाणको ठेलीहरू पेश गर्न सकिन्छ। त्यसो त उहाँ जस्ता 'इतिहासविद' कहिलिएका व्यक्तिलाई म जस्ता साधारणनागरिकले राष्ट्रिय ऐतिहासिकतथ्यलाई लिएर खण्डनमन्डन गर्नु शायद धृष्टता नै होला। तर के यी माथि

उल्लेखित ऐतिहासिक तथ्यहरू मध्ये कति त श्री पंतज्यू आफैले नै जनता अगाडि प्रकाश मा ल्याई दिनु भएको होइन र? आज आफ्नै शोध र अनुसन्धानका ऐतिहासिक सत्यलाई उहाँ आफैले किन ढाकछाप गर्न चाहनु भयो? के यसमा कुनै अदृश्य हातको चमत्कार छ कि?"

दुर्गामानन्दजीले दिनुभएका ती प्रमाणबाट नेपालसंवत्को व्यापकता होइन कि बरू उल्टो सीमितता पो सिद्ध हुन्छ भन्ने कुरा मैले माथि खुलाएर लेखिसकेकोले फेरि दोहऱ्याउनु जरूरी छैन। आफैँले प्रकाश गरेका ऐतिहासिक तथ्यहरूलाई ढाकछोप गर्न खोज्ने भन्ने जुन दोष दुर्गामानन्दजीले मलाई लाउनुभएको छ, त्यस विषयमा केही लेख्नुपरेको छ।

वि. सं. २०१८ देखि एकनासले नेपालको इतिहासको शोध गरेर म आइरहेको छु। मेरा २० वर्षको इतिहासको साधनाले नेपालको इतिहासमा के कति प्रकाश परेको छ भन्ने कुराको समीक्षा आज नभए पनि भोलि अवश्य हुनेछ भन्ने विश्वासले नै मलाई यस क्षेत्रमा प्रेरणा दिइरहेको छ। नेवारी भाषासम्बन्धी अन्वेषणको झगडा हल्लाएर सम्प्रदायका नेता भई हिड्ने भाषाजवाःहरूको भन्दा नेवारी भाषाका लुप्त भइरहेका लिखतलाई प्रकाश गर्ने र तिनको अर्थ गर्ने काम मैले बढी गरेको छु भन्ने कुरा निष्पक्ष समीक्षकहरूले बोल्नु नै पर्नेछ। म नेवारी भाषाको, नेपालसंवत्को विरोधी पहिले पनि थिइनँ, अहिले पनि छैन। मैले नेवारहरूलाई गिराउन नेपालसंवत्को राष्ट्रिय मान्यताको विरोध गरेको पनि होइन। मैले त खालि एकजना ऐतिहासिकको विशुद्ध बुद्धिले हेरेर नेपालसंवत् विक्रमसंवत् जस्तो व्यापक नभएकोले यसले विक्रमसंवत्को ठाउँ



लिन सक्दैन भनेर मात्र भनेको हुँ। यस कारण मैले कुन कुन ऐतिहासिक तथ्यलाई ढाकछोप गरेँ, यसलाई दुर्गामानन्दजी वा उहाँका गुरुहरूले स्पष्ट पार्ने बेला आएको छ।

नेपालसंवत्ले विक्रमसंवत्को ठाउँ लिन सक्दैन भनी मैले भनेकोले मेरा "विगत कृतिहरू प्रति नै शङ्का उठाउने आधार बन्न गएको छ" भनेर आफ्नो लेखको शुरूमा दुर्गामानन्दजीले लेख्नुभएको छ। अरूलाई मनपरी गाली गर्नु भनेको अर्कै कुरा हो, प्रमाण दिएर कसैको गल्ती देखाउन सक्नु भनेको अर्कै कुरा भन्ने कुरा उहाँलाई थाहा नभए पनि उहाँका गुरु वकील साहेबलाई त अवश्य थाहा हुनुपर्ने हो।

दुर्गामानन्दजीका अनर्गल प्रलापको खण्डन गरेर म मानिसका पाताका पाता कति रङ्गाऊँ। तैपनि केही कुरा चाँहि लेख्नु अझ बाँकी छ।

× × ×

दुर्गामानन्दजीको सोचाइको सीमाको अर्को एउटा नमूना हेरौँ—

"उहाँका अनुसार यस सम्वतलाई राष्ट्रिय रूपमा स्वीकार गर्दा नेवारहरूको स्वत्व कायम हुन्छ र? त्यसैले नै होला उहाँले यसलाई अस्वीकार गर्नु भएको? तर यस्तै हो भने आज राष्ट्रिय रूपमा स्वीकर गरिरहेको नेवारहरूकै कलाकृति, मन्दिर, नृत्य र सङ्गीतलाई पनि सरकारी रूपमा बहिष्कार गर्न सक्नु पऱ्यो। नेपाल को राष्ट्रिय लिपीको रूपमा राष्ट्र सङ्घमा दर्ता गरिएको नेवारहरूकै रंजना लिपीलाई पनि रद्द गराउने शाहस देखाउनु पऱ्यो। अरू त के नेवार शब्दसङ्ग ऐतिहासिक रूपमा संदिग्द नेपाल शब्दलाई नै फोर्ने आँट

हुनुपर्‍यो । श्री ५ को सरकारले अन्तर्राष्ट्रिय जगतमा नेपालको अस्तित्व र मौलिकता देखाउन हरेक बर्ष संयुक्त राष्ट्र सङ्घ मा नेपाल सम्बत फेरिने दिन नेपालको राष्ट्रिय पर्वको रूपमा नेपाल डे मनाउँदै आइरहेकोमा उहाँले किन विरोध गर्न नसक्नु भएको हो ?"

दुर्गामानन्दजीको यस लेखाइबाट नेवारहरूको जरैदेखि नाश गर्न मैले खोजेको छु भन्ने भ्रम पर्न जान्छ । उहाँको कुरा पत्याउने हो भने त म नेवारको ने पनि मेट्न लागेको छु भन्ने बुझिन्छ । नेपालसंवत्‌को राष्ट्रिय स्तरको मान्यताको विरोध गर्ने हो भने "नेवारहरूकै कलाकृति, मन्दिर, नृत्य र सङ्गीतलाई पनि सरकारी रूपमा बहिष्कार गर्न सक्नु पर्‍यो" भनेर दुर्गामानन्दजीले लेख्नु-भएको छ । साँच्चै भन्ने हो भने मैले नेपालसंवत्‌को पनि विरोध गरेको होइन; मैले त नेपालसंवत नेवारहरूमा मात्र चलेको संवत् हो, अरू भाषाभाषीमा चलेको छैन; यस कारण सीमित रूपमा चलेको नेपालसंवत्‌ले राष्ट्रिय रूपमा चलेको विक्रमसंवत्‌को ठाउँ कसरी लिन सक्छ भनेर मात्र लेखेको हुँ ।

कूपमण्डूक दुर्गामानन्दजीलाई नेवारी कलाकृति, मन्दिर, नृत्य र सङ्गीतको निकै गर्व रहेछ । यस विषयमा पनि केही लेख्नु-परेको छ ।

नेपालखाल्डो पहिलेदेखि नेपालको केन्द्र रहिआएकोले नेपाल-को इतिहास, कलाकृति आदिको खोजी गर्नेहरूको दृष्टि खास गरी नेपालखाल्डोमै केन्द्रित भयो । यसैले देशका अरू भागको तुलनामा नेपाल खाल्डोको विषयमा निकै खोजी भयो, निकै लेखियो र निकै



प्रचार भयो । यसको अर्थ नेपालका अरू भागमा कलाकृति, मन्दिर, नृत्य, सङ्गीत केही पनि थिएन भन्ने होइन । तिरहुतेहरूका कलाकृति नेवारहरूका भन्दा कम पाइए तापनि घटिया दर्जाका छैनन् भन्ने कुरा बचेखुचेका तिरहुते कलाकृतिहरूले हामीलाई देखाइरहेका छन् । यो त एउटा उदाहरण मात्र हो । यस विषयमा दुर्गामानन्दजीले वा उहाँका सम्प्रदायवादी गुरुजनले कहिल्यै विचार गर्नुभएको छ ?

संयुक्त राष्ट्रसङ्घमा रञ्जना लिपिलाई नेपालको राष्ट्रिय लिपिको रूपमा दर्ता गरिएको छ भनेर दुर्गामानन्दजीले लेख्नु-भएको छ । यो नयाँ कुरा सुनियो । नेपालको संविधानमा त देवनागरी लिपिलाई नै राष्ट्रिय लिपिको मान्यता मिलेको छ । यो कुरा हामीलाई थाहा छ ! दुर्गामानन्दजीको लेखाइको भरमा परेर रञ्जना लिपिलाई संयुक्त राष्ट्रसङ्घमा नेपालको राष्ट्रिय लिपिको मान्यता मिलेको छ भन्ने कुराको विरोध गर्दै म कसरी हिँडूँ ? कागले तपाईँको कान लग्यो भनेर कसैले तपाईँलाई भन्यो भने तपाईँ कागको पछि दगुर्नु हुन्छ कि आफ्नो कान पहिले छाम्नुहुन्छ दुर्गामानन्दजी !

नेपालसंवत् फेरिने दिन संयुक्त राष्ट्रसङ्घमा नेपालदिवस मान्दै आइरहेको कुराको मैले किन विरोध गर्न सकिनँ भनेर दुर्गामानन्दजीले मसँग सोध्नुभएको छ । संयुक्त राष्ट्र-सङ्घमा होइन, न्यू योर्कको अन्तरराष्ट्रिय समुदायकेन्द्रमा लक्ष्मी-पूजाको दिन नेपाल दिवस मानियो भनी राष्ट्रिय संवाद-समितिको खबरबाट बुझिन्छ । त्यस खबरमा नेपाली लोकनृत्य

नाम्बिए, नेवारी, पहाडिया र तामाङ पोशाकको प्रदर्शन गरियो, लक्ष्मीपूजा मानियो, भैलो गाइयो भनी भनिएको छ । नेपाल-संवत्को नववर्षारम्भ मानियो भनी त्यस खबरमा लेखिएको छैन । त्यसमाथि नेपालसंवत् लक्ष्मीपूजाको दिन होइन, गोवर्धनपूजाको दिन फेरिन्छ । लक्ष्मीपूजाको दिन नेपालसंवत्को न्यू यर्'ज् इभ् मानेको हो भने त्यसको चर्चा खबरमा हुनुपर्ने हो । यस कारण नेपालदिवस र नेपालसंवत्को अन्योन्याश्रित सम्बन्ध छ भन्ने कुरा हामीलाई थाहा छैन । यस कारण नेपालदिवसको मैले विरोध गर्न सकिनँ भनेर दुर्गामानन्दजीले लेख्नुभएको कुरामा कुनै सार छैन ।

दुर्गामानन्दजी !

विशुद्ध ऐतिहासिकको नाताले मैले आलोचना गर्दा हिजो कसैलाई मर्का परेको थियो भने आज तपाईँ जस्ता सम्प्रदाय-वादीहरूलाई मर्का परेको छ । यो मलाई राम्ररी थाहा छ ।

तपाईँ जस्ता सम्प्रदायवादीहरू जस्तो लिँडे ढिपी गर्नु हुन्छ, त्यस्तो लिँडे ढिपी त मैले कहिल्यै गरेको छैन, गर्ने पनि छैन । तर सत्य कुराको लागि साहस देखाउने काम पहिले पनि गरिएको थियो, अहिले पनि गरिँदैछ, पछि पनि गरिनेछ । वि. सं. २०२५ मा इन्द्रजात्राको दिन नेपालको एकीकरणको दुइ सय वर्षको जयन्ती मान्दा यही महेशराज पन्तले लेखेर विरोध गर्ने आँट गरेको थियो । राष्ट्रिय विभूतिहरूको विभूतित्वमा अरू कसैले होइन, यही महेशराज पन्तले शङ्का उठाएको थियो । स्थिति बाँध्ने राजाको नाताले गोरखाका राजा राम शाह राष्ट्रिय विभूति हुन सक्छन भने त्यही काम दुइ सय वर्षभन्दा अघि गर्ने, नेपाल



खाल्डो र यसको वरपरका इलाकामा राज्य गर्ने नेवार राजा स्थिति मल्लचाहिँ त्यो सम्मान पाउन कति कारणले योग्य ठहरिएनन् भन्ने प्रश्न अरू कसैले होइन, यही महेशराज पन्तले उठाएको थियो । सत्य प्रायः तीतो हुन्छ । हितं मनोहारि च दुर्लभं वचः भनेर भनेको पनि छ । मैले प्रकाशमा ल्याएको सत्य तपाईँहरूलाई कटु भयो र त्यस कटु सत्यबाट अहिले तपाईँ जस्ता सम्प्रदाय-वादीहरू तिरमिराउनुभएको छ । यो पनि मलाई थाहा छ । यसैले दुर्गामानन्दजी, तपाईँले मेरो चरित्रमा कलङ्क लाउने दुस्साहस गर्नुभएको हो । यसमा मलाई कति पनि अपशोच छैन । किनभने राक्षसको धर्म बाहुनहरूलाई मारेर खानु, यज्ञयागादि गर्नेहरूलाई मार्नु, शहरका शहर उजाड पार्नु, वेदविहित आचरणको जसरी भए पनि विरोध गर्नु भए जस्तै अरूको शुद्ध चरित्रमा झूठमूठ बोलेर वा लेखेर दाग लाउन खोज्नु तपाईँ जस्ता सम्प्रदायवादीहरू-को धर्म हो भन्ने कुरा मलाई राम्ररी थाहा छ ।

× × ×

दुर्गामानन्दजीको लेखाइको अर्को नमूना हेरौँ –

"अर्को कुरा उहाँले नेपाल सम्वतको अस्तित्वलाई नेवार समुदाय सङ्ग सम्वन्धित देखाउँदै नेवार समुदायलाई अल्पसंख्यक'एकै ठाउँमा गुचमुचिएर बसेका आदि संज्ञामा तिरस्कार गर्न चाहनु भयो । काठमाडौं उपत्यका र त्यस वरपरका क्षेत्र लगायत धनकुटा, धरान, विराटनगर, भोजपुर, चैनपुर, दोलखा, त्रिशुली, भरतपुर, नारायणगढ, बीरगंज, हेटौडा, पाल्पा, बुटवल, पोखरा, बागलुङ तथा अन्यत्र समेत बसोबास

गरेका नेवारहरू उहाँले भने जस्तै के एक ठाउँमा गुचमुचिएर बसेका ठहरिए त ? वास्तवमा उहाँले यस्तो गंथन गर्नु भएर काठमाडौं उपत्यका भित्र मात्र एक भाषाभाषीहरूले नेपाल सम्वत नयाँ बर्ष मनाइन्छ भनी प्रमाणित गर्ने असत्य आधार बनाउनु भएको हो।"

नेवारबाहेक अरू नेपालीले नेपालसंवत् मान्दैनन, यो कुरा मैले भनिरहनु पर्दैन । नेवारहरूको नेवारी भाषासँग जस्तो सम्बन्ध छ, त्यस्तै त्यस्तै सम्बन्ध नेवारहरूको नेपालसंवत्सँग पनि छ। नेपालमा सयकडा कतिको जन्मभाषा नेवारी छ भन्ने कुरा जनगणनाको लगत हेरे स्पष्ट थाहा हुन्छ । नेवारी भाषा जन्मभाषा हुनेहरूको सङ्ख्या वि. सं. २०१८ को जनगणनाअनुसार ४ लाख पनि छैन । ६३ लाखको जनसङ्ख्यामा ४ लाख अल्पसङ्ख्यक नभए बहुसङ्ख्यक कसरी हुन्छ ? नेवारी भाषा बि. सं. २०१८ को जनगणनाअनुसार सयकडा चारको जन्मभाषा हो भन्ने स्पष्ट हुन्छ। सयकडा चारले बोल्ने भाषा जन्मभाषा भएकाहरूलाई मैले अल्पसङ्ख्यक भनेर के बिगारेँ ? म केही बुझ्न सक्दिनँ । यस कारण नेपालसंवत् अल्पसङ्ख्यक भाषाभाषीहरूको संवत्को रूपमा रहेको छ । भन्ने स्पष्ट छ । यो सत्य हो । दुर्गामानन्दजी जस्ता नेपालसंवत्को राष्ट्रिय मान्यताको लागि चिच्याउनेहरूको लागि यो सत्य कटु छ, यसमा शङ्का छैन । कुनै वर्गको लागि कटु भए पनि सत्य कुरा बोल्न म कहिल्यै पछि हटेको छैन, हट्ने पनि छैन। अहिले सम्प्रदायवादीहरूलाई रिझाउन नेपालसंवत् नेपालमा जताततै चलेको व्यापक संवत् हो भनी म भन्न सक्दिनँ।

अर्को कुरा नेवारहरूलाई मैले एकै ठाउँमा गुचमुचिएर बसेका भनेर जो लेखेँ, त्यसमा दुर्गामानन्दजीले चित्त दुखाउनुभएको रहेछ र मैले नेवारहरूलाई तिरस्कार गर्ने यस्तो लेखेँ भन्ने उहाँको भनाइ रहेछ । मैले नेवारहरूलाई एकै ठाउँमा गुचमुचिएर बसेका भनी जो लेखेँ, त्यो सत्य हो । त्यो मैले नेवारहरूलाई तिरस्कार गर्न लेखेको होइन ।

दुर्गामानन्दजीले नेपालखाल्डो र त्यसको वरपरका इलाकाबाहेक अन्यत्र पनि नेवार छन् भनी सिद्ध गर्न नेवारहरूको बसोबास भएका निकै शहरहरूको नाउँ लिनुभएको छ र त्यताबाट नेवारहरू एकै ठाउँमा गुचमुचिएर बसेका छैनन् भनी सिद्ध गर्न खोज्नुभएको छ । तर उहाँले यस्तो लेखे पनि स्थिति यसभन्दा निकै फरक छ। नेवारहरू खास गरी नेपालखाल्डो र यसको वरपर नै बसेका छन् । अन्त बाहिरफेर ठाउँठाउँमा बजार इलाकामा यिनीहरूको निकै पातलो बस्ती छ । यसबाहेक अन्त यिनीहरूको बस्ती छैन । यो कुरा नेपाल घुमेका वा नेपालको विषयमा पढेका जो कोहीलाई थाहा भएको कुरा हो । यस कारण नेवारहरू केही मात्रामा भएका केही शहरहरूको नाउँ लिँदैमा नेवारहरू गुचमुचिएर रहेका छैनन् र देशमा जताततै व्यापक रूपमा छरिएर रहेका छन् भन्ने कुरा सिद्ध हुँदैन ।

× × ×

यसपछि दुर्गामानन्दजी लेख्नुहुन्छ–

"सबभन्दा आश्चर्य लाग्दो कुरा, भारतबाट आयात गरिएको विक्रम सम्वत एक विदेशी मूलको सम्वतलाई राष्ट्रिय सम्वत भन्ने र स्वीकार गर्न सक्ने श्री पंतज्यूले आफ्नै देश, माटो, हावापानीबाट

सृजना भएको नेपाल सम्वतलाई किन राष्ट्रिय रूपमा स्वीकार गर्न सक्नु भएन? यी उहाँको कस्तो राष्ट्रियता ? उहाँको तर्क छ, 'आज हामीले विक्रम सम्वतको ठाउँमा नेपाल सम्वतलाई राष्ट्रिय स्तरको मान्यता दियौं भने भोलि तराईका हाम्रा बन्धुहरूले नेपाल सम्वतको ठाउँमा लक्ष्मण सम्वत आदि स्थानीय सम्वतको राष्ट्रिय स्तरको मान्यता उठाउँदैनन र पर्सी भोट मूलका हाम्रा बन्धुहरूले भोटको सम्वतको राष्ट्रिय स्तरको मान्यताको माग गर्दैनन् भनी भन्न सकिँदैन।' हो म उहाँको यो तर्कलाई मान्न तयार छु, यदि यस तर्कका आधार सही भएको भए। नेपालमा विक्रम सम्वत लगायत, नेपाल सम्वत, भोट सम्वत र लक्ष्मण सम्वत मात्र होइन शक संवत, ठकुरी संवत, बुद्ध संवत, कलि संबत, ईस्वी संवत आदि संवतहरू पनि प्रचलनमा छन् तर यी मध्ये बुद्ध संवत, ठकुरी संबत र नेपाल संवत बाहेक अरू कुनै पनि नेपालमूलका होइनन्। ती संवतलाई स्वीकार्नु विक्रम संवतलाई स्वीकार्नु भएदा केही भिन्नता नै रहन्न। अब कुरा आयो ठकुरी संवत र बुद्ध संबतको। यी सम्वत पनि एक जात र एक धर्म सम्प्रदायका आधारमा प्रचलित भएका हुन्, जस मध्ये बुद्ध सम्वतको त वार्षिक गणना मात्र गरिन्छ महिना, दिन, बारको कुनै व्यवस्था नै छैन। तर यसको विपरित नेपाल सम्वत उपरोक्त सम्वतहरू जस्तै कुनै खास वर्ग जात धर्म र समुदायको नाउँमा आधारित नभै सबै नेपालीले अङ्गिकार गर्न सक्ने गरी नेपाल नाउँ मा आधारित छन्। अर्को कुरा 'जनस्तरबाट स्थापित' एक नेपाली जनताको त्याग र बलिदानको प्रतिकको स्वरूप नेपाल सम्बतलाई अङ्गिकार गर्नु भन्नु नै आजको जनवादी युगमा



जनताको सही कदर गर्नु हो।"

यहाँ दुर्गामानन्दजीले विक्रमसंवत्लाई "भारतबाट आयात गरिएको" भनी भन्नुभएको छ। कुनै पनि संस्कृतिको सीमा राजनीतिको सीमाभन्दा ठूलो हुन्छ भनी मैले पहिल्यै भनिसकेको छु। वज्राचार्य भन्ने उपनाम भएका दुर्गामानन्दजीलाई म एउटा-प्रश्न गर्छु, तपाईँले मान्ने गरेको वज्रयानको उत्पत्ति के नेपाल-खाल्डोमै भएको हो ? विक्रमसंवत्लाई तपाईँ "भारतबाट आयात गरिएको" भनी भन्नुहुन्छ भने त्यही विशेषण के वज्रयानमा लाग्न सक्दैन ? त्यस विषयमा तपाईँले कहिल्यै विचार गर्नुभएको छ ? सवाल आफ्नै देश, माटो, हावापानीमा सिर्जना भएको भन्ने होइन। सवाल छ कुनै पनि कुरा जनतामा कति भिजेको छ भन्ने। अन्त किन जाऔँ, संवत्कै उदाहरण लिऔँ। भारतमा अङ्ग्रेजी शासनको अवशेषको रूपमा रहेको ईसवी संवत्को विरोध गरी शकसंवत्लाई राष्ट्रिय संवत्को मान्यता दिइयो। तर व्यवहारमा अहिले पनि ईसवी संवत् नै चलेको छ। हात्तीको देखाउने दाँत एउटा र खाने दाँत एउटा भने जस्तै अहिले भारतको देखाउने संवत् शकसंवत् र व्यवहारमा चलेको संवत् ईसवी संवत् छ। नेपाल-संवत्लाई राष्ट्रिय मान्यता दिए पनि जनजीवनमा त्यसै भिज्न सक्दैन, यसको लागि निकै लामो समयको निरन्तर प्रयासको दरकार पर्छ। नेपालसंवत् मान्दैमा राष्ट्रिय, विक्रमसंवत् मान्दैमा अराष्ट्रिय हुने होइन। अल्पसङ्ख्यकहरूको मात्र ममता भएको, सीमित रूपमा चलेको संवत्लाई चलाउन पहिलेदेखि अहिलेसम्म व्यापक रूपले चलेको विक्रमसंवत्लाई हटाउनु कति पनि जरूरी छैन।

दुर्गामानन्दजीले नेपालमा चलेका संवत्हरूको सूची दिनुभएको छ । तर उहाँको अधकल्चो ज्ञानले गर्दा सो सूची अशुद्ध र अपूरो पनि छ । ठकुरीसंवत् नेपालमा चलेको छ भनी उहाँले लेख्नुभएको छ । कुन संवत्लाई उहाँले ठकुरीसंवत् भन्नुभएको हो ? ठकुरीसंवत् भनेर दुर्गामानन्दजीले मानदेवसंवत्लाई भन्नुभएको होला । खास नाउँ पाइसकेपछि पनि पुराना ऐतिहासिकहरूको पछि लागी दुर्गामानन्दजी अझ मानदेवसंवत्लाई ठकुरीसंवत् भन्दै हुनुहुन्छ । यताबाट दुर्गामानन्दजीको ज्ञानको सीमा कत्रो रहेछ भन्ने हामी अन्दाजी गर्न सक्छौँ । अहिले नेपालको कुन ठाउँमा मानदेवसंवत् अर्थात् ठकुरीसंवत्को चलती छ, यस विषयमा दुर्गामानन्दजीले प्रकाश पारिदिनु भए हुन्थ्यो ।

दुर्गामानन्दजी !

तपाईँको सूचीलाई म अझ लामो पारिदिन सक्छु । हाम्रा पात्रामा सृष्टिसंवत् पनि दिएको हुन्छ । त्यो पनि तपाईँको सूचीमा थप्नु भए हुन्छ ।

नेपालमा मुसलमानहरूको पनि कम सङ्ख्यामा बसोबास नभएकोले नेपालका जानपद मुसलमानहरूले धर्मकार्यमा मान्ने गरेको हिजरीसंवत् पनि तपाईँको सूचीमा किन परेन ?

दुर्गामानन्दजी ! कुनै पनि संवत् जबरस्दतीले चल्दैन । चन्द्रशमशेरको पालामा एक थरीले चन्द्रसंवत् चलाउने उद्योग गरेका थिए । त्यस्तै गरी प्रजातन्त्र भएपछि अर्को थरीले त्रिभुवनसंवत् चलाउने उद्योग गरे । ती उद्योग जसरी आए त्यसरी नै गए ।



दुर्गामानन्दजीले बुद्धसंवत् नेपालमूलको भनी भन्नुभएको छ । तर अहिले नेपालमा चलेको बुद्धसंवत् श्रीलङ्कामूलको हो, नेपालमूलको होइन भन्ने कुरा दुर्गामानन्दजीलाई थाहा नभए पनि उहाँका गुरुजनलाई थाहा हुनुपर्ने हो ।

नेपालमूलका भनी दुर्गामानन्दजीले दर्नु भएका बुद्धसंवत्, ठकुरीसंवत् र नेपालसंवत्मध्ये पहिला दुइ संवत्लाई एक जात र धर्म सम्प्रदायमा मात्र चलेको भनी उहाँले भन्नुभएको छ ।

उहाँको ठकुरीसंवत् अर्थात् मानदेवसंवत् वि. सं. ६३३ देखि वि. सं ९३६ सम्मको नेपालमा तीन सय बर्षसम्म चलेको थियो । यो संवत् कसरी एक जातमा मात्र चल्यो ? ठकुरीसंवत् भन्ने कल्पनामय नाउँ राखिएको संवत् हुनाले दुर्गामानन्दजीलाई यो संवत् ठकुरीहरूमा मात्र चल्यो भन्ने भ्रम पर्न गएको देखिन्छ ।

मैले "आज हामीले विक्रमसंवत्को ठाउँमा नेपालसंवत्लाई राष्ट्रिय मान्यता दियौँ भने भोलि तराईका हाम्रा बन्धुहरूले नेपालसंवत्को ठाउँमा लक्ष्मणसंवत् आदि स्थानीय संवत्को माग उठाउँदैनन् र पर्सि भोटमूलका हाम्रा बन्धुहरूले भोटको संवत्को राष्ट्रिय स्तरको मान्यताको माग गर्दैनन् भनी भन्न सकिँदैन" भनी लेखेको थिएँ । वज्राचार्यजी ती दुइ संवत् नेपालमूलका नभएकाले तिनले राष्ट्रिय स्तरको मान्यता पाउन सक्दैनन् भनी भन्नुहुन्छ । नेपालमूलको हुँदैमा राष्ट्रिय मान्यता पाउने, नेपालमूलको नहुँदैमा राष्ट्रिय मान्यता नपाउने भन्ने कुरा छैन । कुनै पनि कुरा कति व्यापक छ त्यसकै आधारमा

राष्ट्रिय मान्यताको सवाल उठ्छ । तराईका बन्धुहरू र भोटमूलका बन्धुहरू यी दुवै थरी नेवार बन्धुहरूभन्दा निकै बढी छन् र तिनीहरूले ओगटेको क्षेत्रफल पनि नेवारहरूले ओगटेको क्षेत्रफल-भन्दा निकै बढी छ । नेवारहरू आफ्नो संवत्‌को राष्ट्रिय मान्यताको लागि चिच्याउँछन् र उनीहरूको चिच्याहटको सुनवाइ हुन्छ भने भोलि बढी जनधन भएका अरूहरूले आफ्नो संवत्‌को राष्ट्रिय मान्यताको लागि चिच्याउँदा उनीहरूको मुखमा कसरी बुझो लाउने ?

"नेपाल सम्वत उपरोक्त सम्वतहरू जस्तै कुनै खास वर्ग जात, धर्म र समुदायको नाउँमा आधारित नभै सबै नेपालीले अङ्गिकार गर्न सक्ने गरी नेपाल नाउँमा आधारित छन्" भनी दुर्गामानन्दजीले भन्नुभएको छ । तर नेपालसंवत् भनी कहलिएको यस संवत्‌मा नेपाल भन्ने शब्द कहिलेदेखि जोडिन थाल्यो ? यसमा दुर्गा-मानन्दजीले विचार नगरे पनि उहाँका गुरुहरूले त अवश्यै विचार गर्नु भएको होला । भैगो, यस विषयमा लेख्नु परे पछि खुलाएर लेखुँला ।

अर्को कुरा दुर्गामानन्दजीले नेपालसंवत्‌लाई "जनस्तरबाट स्थापित,एक नेपाली जनताको त्याग र बलिदानको प्रतिकको स्वरूप" भनी भन्नुभएको छ । साथै "नेपाल सम्वतलाई अङ्गीकार गर्नु भन्नु नै आजको जनवादी युगमा जनताको सही कदर गर्नु हो" भनी उहाँले भन्नुभएको छ । नेपालसंवत्‌लाई उहाँका एक थरी गुरु राजा राघवदेवले चलाएको भन्छन्, उहाँका अर्को थरी गुरुचाहिँ साहू शङ्खधरले चलाएको भन्छन् । जनवादीहरूका परिभाषाअनुसार दुवै



थरी जनता होइनन् । यस कारण नेपालसंवत् जनस्तरबाट स्थापित संवत् कसरी भयो ? यसलाई दुर्गामानन्दजीले स्पष्ट गर्नुपरेको छ ।

* * *

यसपछि दुर्गामानन्दजी भारतविरोधीहरूको रिस समाधि जन्धाउन यस्तो लेख्नुहुन्छ-

"हुन त आज नेपाली जन जीवनमा भारतीय प्रभुत्वको स्वरूप थोपरी रहेको विक्रम सम्वतलाई तथ्य र ऐतिहासिक प्रमाणको आधारमा विदेशी सम्वत हो भन्दा आपत्ति जनाउन खोज्नु जस्तो राष्ट्रिय बिडम्बना अरू के होला ? वास्तवमा विक्रम सम्वतको प्रचलन-लाई अस्वीकार गर्दा कसैले आफ्नो वर्ग जात र समुदायलाई हाँक दिए जस्तो ठान्नुको अर्थ के हो? राष्ट्रियतासङ्ग कुनै सम्बन्ध नभएका यी भावुकताहरू कहाँबाट पलाए ? १९६० वि. सं. देखि राष्ट्रिय रूपमा चलेको (हेर्नुस् श्री ५ बडामहाराजाधिराज पृथ्वी नारायण शाहको जीवनी भाग १, एक दुई कुरा,- बाबुराम आचार्य) विक्रम सम्वतलाई '... परम्परा देखि चलि आएको नेपाली जनजीवनमा भिजेको ...' भनी आत्मियता देखाएर राष्ट्रिय सम्वत नेपाल सम्वतलाई तिरस्कार गर्नु पर्ने वास्तवमा के उद्देश्यबाट प्रेरित हो ?"

दुर्गामानन्दजी !

आज तपाईँले विक्रमसंवत्‌लाई "नेपाली जन जीवनमा भारतीय प्रभुत्वको स्वरूप थोपरी रहेको" भनी भन्नुभएकोले भोलि नेपालको संविधानद्वारा राष्ट्रभाषा भनी मानिएको, देवनागरी

लिपिमा लेखिएको नेपाली भाषालाईपनि "भारतीय प्रभुत्वको स्वरूप थोपरी रहेको" भनी भन्न तपाईं कति पनि हिचकाउनुहुनेछैन भन्ने कुरा हामीले ठान्नुपर्ने अवस्था आएको छ। पर्सि फेरि भारतकै प्रभुत्वको हौवा देखाएर देवनागरी लिपिमा लेखिएको नेपाली भाषालाई राष्ट्रभाषा मात्राले देवनागरी लिपि भारतीय मूलको भएकोले र आजसम्म पनि देवनागरी लिपि भारतमा पनि चलिरहेकोले र नेपाली भाषा भारतका हिन्दी बङ्गाली आदि भाषाहरूको नजीकको भएको र भारतको एक राज्यको राज्यभाषा पनि भएकोले देवनागरी लिपिमा लेखिएको नेपाली भाषालाई हटाई अन्त कतै नचलेको, नेवारी लिपिमा लेखिएको, नामै नेपालभाषा भएको नेवारी भाषालाई राष्ट्रभाषा मान्नुपर्छ भनी तपाईंहरूले माग गर्नुहुनेछ भनी हामीले विचार गर्नुपर्ने खण्ड आइसकेको छ। नेपालसंवत्का पक्षपाती तपाईंहरूले नेवारी लिपिमा र नेवारी भाषामा नेपालसंवत्को राष्ट्रिय मान्यताको प्रचार गरेर यसको सङ्केत हामीलाई दिई पनि सक्नुभएको छ।

यस कारण दुर्गामानन्दजी, नेपालसंवत्को राष्ट्रिय मान्यताका पक्षपाती तपाईंहरूले गरेको विक्रमसंवत्को विरोध विक्रमसंवत्को मात्र विरोध होइन, राष्ट्रिय अखण्डताको विरोध हो; चार वर्ण ३६ जातको साझा फूलबारीको विरोध हो; अल्पसङ्ख्यकले बहुसङ्ख्यकमाथि आफ्नो संवत् मात्र होइन, लिपि र भाषा पनि लाद्ने कुचक्रको शुरुआत हो भन्ने कुरा हामीले बुझिसकेका छौं।

ऐ. शि. बाबुराम आचार्यले वि. सं. १९६० देखि विक्रमसंवत् राष्ट्रिय संवत् भई चल्यो भनी लेख्नुभएको छ भनी यहाँ दुर्गामानन्दजीले लेख्नुभएको छ। ऐ. शि. बाबुराम आचार्यको लेखाइको दुहाइ दिएर सर्वसाधारणको मनमा विक्रमसंवत् त वि. सं. १९६० देखि पो राष्ट्रिय संवत्को रूपमा चलेको रहेछ, विक्रमसंवत् परम्परादेखि चलेको, नेपाली जनजीवनमा भिजेको भनी महेशराज पन्तले लेखेको झूटो रहेछ भन्ने भ्रम फैलाउन दुर्गामानन्दजीले यहाँ खोज्नुभएको छ। यस कारण सबभन्दा पहिले ऐ. शि. बाबुराम आचार्यले यस विषयमा के लेख्नुभएको रहेछ भनी हेर्नु परेको छ–

"...हाम्रा राष्ट्रिय सम्वत्मा विशेषण गराएर जोडिएको 'विक्रम' शब्द सार्थक देखिन्न।... वास्तवमा यस सम्वत्को उठान वर्तमान राजपूतानामा आवाद भएका मालव-गणले गरेका हुन् भन्ने कुरा त्यहाँ पाइएका शिलालेखहरूबाट प्रमाणित भइसकेको छ। यस कारणले यस सम्वत्का साथ जोडिएको 'विक्रम' भन्ने शब्द हटाउनु आवश्यक भएको छ। तैपनि यो सम्वत् हाम्रो राष्ट्रिय सम्वत् भएकोले त्याज्य छैन; नितान्त ग्राह्य छ।

तर सम्वत् १९६० देखि राष्ट्रिय मास गराएर चाल गरिएको नाक्षत्रिक सौरमास शास्त्रीय छैनन्।

(श्री ५ बडामहाराजाधिराज पृथ्वीनारायण शाहको जीवनी १-२ कुरा)

ऐ. शि. बाबुराम आचार्यले वि. सं. १९६० देखि विक्रमसंवत् राष्ट्रिय रूपमा चलेको भनेर यहाँ भन्नुभएको छैन, वहाँले त नाक्षत्र सौरमास अर्थात् गतेअनुसारको महीनालाई वि. सं. १९६० देखि राष्ट्रिय मास गराएर चालू गरियो मात्र भन्नुभएको हो। उहाँको विरोध खालि विक्रमसंवत्मा लागेको विक्रम शब्दसँग मात्र हो, सो

संवत्‌को राष्ट्रिय मान्यतासँग होइन; उहाँको अर्को विरोध गते-अनुसारको महीनासँग हो भन्ने कुरा उहाँको लेखाइबाट स्पष्ट बुझिन्छ। ऐ. शि. बाबुराम आचार्यले "यो सम्वत् हाम्रो राष्ट्रिय संवत् भएकोले त्याज्य छैन, नितान्त ग्राह्य छ" भनेर भन्नु पनि भएको छ। यस कारण ऐ. शि. बाबुराम आचार्यले विक्रमसंवत्‌लाई वि. सं. १९६० देखि राष्ट्रिय रूपमा चलेको भनी भन्नुभएको छ भनेर सर्वसाधारणलाई ऐ. शि. बाबुराम आचार्यको विद्यातपःपूत व्यक्तित्वको दुहाइ दिएर झुक्याउने काम गर्नसम्म पनि सम्प्रदाय-वादीहरूले शिखण्डीको रूपमा उभ्याइएका श्रीदुर्गामानन्द वज्राचार्य पछि हट्नुभएको छैन भन्ने कुरा स्पष्ट छ।

हो, ऐ. शि. बाबुराम आचार्यले विक्रमसंवत्‌मा लागेको विक्रम शब्दमा गर्नुभएको आपत्तिमा उपपत्ति छैन, नाक्षत्र सौरमास अशास्त्रीय भन्ने उहाँको भनाइमा पनि हाम्रो सहमति छैन र वि. सं. १९६० देखि नाक्षत्र सौरमासलाई राष्ट्रिय मास बनाइएको हो तापनि धेरै धेरै अगाडिदेखि नाक्षत्र सौरमास नेपाली जनजीवनमा भिजि-सकेको थियो। यो कुरालाई आज होइन, वि. सं. २०२४ मै पूर्णिमा १५ अङ्कमा लामो निबन्ध लेखेर पिताजी पं. नयराज पन्तले सिद्ध गरिसक्नुभएको छ। यस कारण ऐ. शि. बाबुराम आचार्यको र हाम्रो बीच रहेको केही मतभेदबाट दुर्गामानन्दजीले फाइदा उठाउन खोज्नुभएको स्पष्ट हुन्छ।

× × ×

श्री दुर्गामानन्द वज्राचार्यले आखिरमा यस्तो लेख्नुभएको छ– "अन्तमा श्री पंतज्यूले आफ्ना गल्तीहरूमा नतमस्तक भएर



प्रायश्चित गर्दै जनता सामू आफ्नो आत्म आलोचना गर्ने कुरामा म विश्वास गर्छु।"

दुर्गामानन्दजी !

तपाईंको विश्वासघात हुन्छ, किन कि मैले जो लेखें, त्यस-मा प्रायश्चित्त गरी सम्प्रदायवादीहरूको अगाडि नतमस्तक हुन म सक्दिनँ; किनभने मैले जो लेखें, त्यो मेरो वर्षौंको मनन चिन्तनको निष्कर्ष थियो; कुनै वर्गबाट प्रेरित भएर क्षणिक लाभको लागि मैले यसो गरेको थिइनँ।

× × ×

अब त पाठकहरूलाई स्पष्ट भयो होला, 'वैचारिक गरीबी' मैले होइन, बरु श्रीदुर्गामानन्द वज्राचार्यले देखाउनुभएको छ भन्ने कुरा।

× × ×

वि. सं. २०३८ मङ्सीर १७ गतेको मानसमा श्री ज्ञानबहादुर नेवाले सम्पादकलाई लेख्नुभएको पत्र पनि छापिएको छ। यस प्रसङ्गमा त्यस विषयमा पनि अलिकता चर्चा गर्नुपरेको छ। पृथ्वीनारायण शाहले गोरखालाई ठूलो नबनाएर नेपाललाई ठूलो बनाएकाले "नेपाल संवत पनि अब पुरानो सानो नेपालको मात्र नरहेर आजको बृहत नेपालकै संवत हुन गएको छ। तसर्थ अब त्यो नेपाल संवत पनि पुरानो सानो नेपालका निवासी अर्थात नेवार संप्रदायको मात्र एकलौटी नरहेर बर्तमान बृहत्तर नेपालका निवासी नेपाली मात्र सबैको साझाभएर राष्ट्रिय संवत हुनगएको छ?" भनेर नेवाजीले एक ठाउँमा लेख्नुभएको रहेछ। नेवाजीको

लेखाइबाट नेपाल भनेको नेपालखाल्डो मात्र हो, बाहिरफेर होइन भन्ने भाव स्पष्ट झल्किएको छ। नेपाल राज्य प्राचीनकालमा ठूलो थियो, पछि टुक्रिँदै जाँदा पुरानो नेपाल राज्य पचास जति टुक्रामा बाँडियो। नेपाल राज्यको केन्द्र नेपालखाल्डो भएकोले नेपाल भन्ने शब्दले पछि गएर नेपालखाल्डोलाई मात्र बुझाउन थाल्यो तापनि प्राचीनकालमा नेपाल शब्दले नेपालखाल्डोलाई मात्र नबुझाई बृहत् नेपाललाई बुझाउँथ्यो भन्ने स्पष्ट छ। अन्धकारमा डुबेको बेलाको नेपाल शब्दको अर्थलाई अघि सारेर नेवाजीले नेपाललाई नेपालखाल्डोमा मात्र सीमित राख्न खोज्नुभएको छ। सम्प्रदायवादले दूषित नेवाजीको लेखको विषयमा यसभन्दा बढी लेख्नु आवश्यक छैन भन्ने सम्झी कलम यहीँ रोक्छु।

[४९ पृष्ठको ४ पङ्क्तिदेखि ५० पृष्ठको २१ पङ्क्तिसम्मको भागबाहेक बाँकी लेख वि. सं. २०३८ पुस ८, १५, २२, २९, गतेको र रमाघ ७, १४, २० गतेको मानसमा छापिएको छ]



## "अल्पज्ञ" लाई जवाफ

यही चैत ४ गतेको मानसमा ललितपुरका श्रीविष्णु "अल्पज्ञ"-को नेपालसंवत्को महत्ता गाइएको लेख छापिएको रहेछ। त्यस लेखको मुख्य सार विक्रमसंवत् भनेको सूर्यको गतिअनुसार चल्ने संवत् हो; नेपालसंवत् भनेको चन्द्रको गतिअनुसार चल्ने संवत् हो; हाम्रा सबै धर्मकर्म, चाडपर्व, जात्रामात्रा चन्द्रको गतिअनुसार अर्थात् तिथिअनुसार गरिने हुनाले गतेअनुसार चल्ने विक्रम-संवत्को राष्ट्रिय मान्यता खारेज गरी तिथिअनुसार चल्ने नेपाल-संवत्लाई राष्ट्रिय मान्यता दिनुपर्छ भन्ने रहेछ।

श्रीविष्णु "अल्पज्ञ" को सो लेख पढेपछि पञ्चाङ्गपद्धतिको सामान्य ज्ञान भएको मानिसलाई पनि श्रीविष्णुको उपनाम ज्यादै सार्थक रहेछ भन्ने कुरा सहजै लाग्छ। तर कुनै पनि विषयको ज्ञान नभएका, अखबारी होहल्लामा लागी उमेर बिताएका मानिसहरूलाई भने यस्ता लेखले पनि प्रभाव पार्दो रहेछ भन्ने कुरा माघ २८ गतेको मानसमा श्रीरत्नकृष्ण श्रेष्ठको लेख

छापिसकेपछि "नेपालसम्वत बारे यो छलफल यहीं टुङ्गिन्छ" भनी प्रतिज्ञा गरिसकेपछि पनि मानसका सम्पादकजीले प्रतिज्ञा-भङ्ग गरी नेपालसंवत्सम्बन्धी श्रीविष्णु "अल्पज्ञ"को लेख छपाउनुभएकोले बुझिएको छ । यस कारण श्री"अल्पज्ञ"को अल्पज्ञताको द्योतक त्यस लेखको विषयमा केही लेख्नुपरेको छ ।

पूर्णिमाको दिन चन्द्रमा पूरा बाटुला देखिने र त्यसको भोलिपल्टदेखि अलिअलि घट्दै गई पूर्णिमाको पन्ध्र दिन जतिपछि औँसीमा चन्द्रमा पटक्कै नदेखिने कुरा हामीले अनुभव गरेकै हो । औँसीको भोलिपल्ट परेवादेखि चन्द्रमा अलिअलि देखिँदै गई पूर्णिमाको दिन पूरै बाटुलो देखिने पनि हामीले अनुभव गरेकै छौँ । पुगनपुग तीस दिनमा चन्द्रमा घट्ने बढ्ने क्रम पूरा हुन्छ र यो क्रम फेरि दोहरिन थाल्छ । यी दिनलाई तिथि भन्ने चलन छ । एउटा औँसीदेखि अर्को औँसीसम्म चन्द्रमा घट्ने बढ्ने क्रम पूरा हुन्छ । यसैले दुइटा औँसीको बीचमा परेका दिनको सामूहिक नाउँ मास अर्थात् महीना भन्ने रह्यो । तिथि र महीनाको सम्बन्ध चन्द्रमाको चालसँग हुने हुनाले चान्द्र भन्ने चलन भएको हो ।

कहिले दिन लामो हुन्छ त कहिले रात लामो । कहिले गर्मी हुन्छ त कहिले जाडो । दिन रात घट्नु बढ्नु र गर्मी जाडो हुनु यी सबको सम्बन्ध सूर्यको चालसँग हुन्छ । बिहान सूर्य पूर्वमा उदाएर पश्चिमतिर सर्दै सर्दै भोलिपल्ट बिहान फेरि पूर्वमा उदाएको सबैले देखेकै कुरा हो । जति समयभित्र सूर्य दुइचोटि उदाउँछन्, त्यति समयलाई सावनदिन भन्ने चलन छ । एक वर्षमा ३६५६



सावनदिन हुन्छन् । एक वर्षमा दिन रात बढ्नु घट्नु गर्मी जाडो हुनु आदि क्रम पूरा भई दोहरिन थाल्छ । यस वर्षलाई सौर भन्ने चलन छ ।

साढे उनन्तीस सावनदिनमा चन्द्रमा बढ्ने घट्ने क्रम पूरा हुन्छ । यिनै साढे उनन्तीस दिनको एक महीना हुन्छ । यसरी एक वर्षमा तीन सय चौवन्न सावनदिन हुन्छन् । तीन सय चौवन्न सावन दिनको एक चान्द्रवर्ष हुन्छ । एक सौरवर्षमा तीन सय पैँसट्ठी सावनदिन र एक चान्द्रवर्षमा तीन सय चौवन्न चान्द्रदिन हुने हुनाले सौरवर्षमा भन्दा चान्द्रवर्षमा एघार दिन कम हुन्छ । यसरी एक वर्षभित्र सौरवर्ष र चान्द्रवर्षमा ११ दिनको फरक पर्छ र झण्डै तीन वर्षमा यो अन्तर एक महीना जतिको हुन्छ । यो अन्तर बढ्दै बढ्दै गई ३३ वर्ष जतिमा सौरवर्ष र चान्द्रवर्षमा पूरा एक वर्षको फरक पर्न जान्छ ।

सौरवर्ष र चान्द्रवर्षमा परेको यस अन्तरलाई मिलाउन ज्योतिषीहरूले तीन वर्ष जतिमा एक महीना थप्ने चलन चलाए । यसरी थपिएको महीना आधिमास कहिन्छ । बोलीचालीमा यसलाई मलमास वा पुरुषोत्तम महीना पनि भन्ने चलन छ ।

यस कारण हाम्रो परिपाटीका जुनसुकै संवत्-विक्रम, शक, नेपाल-मा सौर र चान्द्र दुवै तत्त्व छन् भन्ने कुरा स्पष्ट हुन्छ । "अल्पज्ञ" जीले भने जस्तै नेपालसंवत्मा सौरमान नहुने भए के नेवारी महीनामा सङ्क्रान्ति हुँदैन ? भक्तपुरमा बिस्केटजात्रा वैशाख-सङ्क्रान्तिमा मनाइन्छ । यो जात्रा सौरमानअनुसारको हो, चान्द्र-मानअनुसारको होइन । नेपालसंवत्मा सौरमान नभए बिस्केटजात्रा

सौरमानअनुसार किन मनाइयो ? नेवारहरू घ्यःचाकु सल्हू भनेर माघे सङ्क्रान्ति खूपसँग मनाउँछन्। घ्यःचाकु सल्हू पनि तिथिअनुसार मनाएको हो कि क्या हो ?

यसरी बुझनसुझ लेख लेख्ने रहर गर्ने "अल्पज्ञ" जीलाई केही वर्ष पढ्ने सल्लाह दिँदै म यहीँ चूप लाग्छु।

[वि. सं. २०३८ चैत २५ गतेको मानसमा काटकुट गरी छापिएको यो लेख यहाँ पूरा छापिएको छ ]